# राज्यराष्ट्र

## अवधारणा र सिद्धान्त

डा. निर्मलमणि अधिकारी "आयोदधौम्य"
डा. गोविन्दशरण उपाध्याय

# राज्यराष्ट्र
## अवधारणा र सिद्धान्त


लेखक :

**डा. निर्मलमणि अधिकारी**

काठमाडौँ विश्वविद्यालय, स्कूल अफ् आर्ट्स्,

भाषा तथा आमसञ्चार विभाग

हात्तीवन, ललितपुर, नेपाल

र

**डा. गोविन्दशरण उपाध्याय**

त्रिभुवन विश्वविद्यालय, त्रिचन्द्र क्याम्पस,

मनोविज्ञान तथा दर्शनशास्त्र विभाग

घण्टाघर काठमाडौँ, नेपाल



प्रकाशक :

**रामहरि शर्मा**

**अर्जुन शर्मा**

मध्यबिन्दु नगरपालिका, वार्ड नं. ९, नवलपुर, नवलपरासी, नेपाल

| | |
|---|---|
| कृति | राज्यराष्ट्र अवधारणा र सिद्धान्त |
| लेखक | डा. निर्मलमणि अधिकारी “आयोदधौम्य” र<br>डा. गोविन्दशरण उपाध्याय |
| प्रकाशक | रामहरि शर्मा र अर्जुन शर्मा<br>मध्यबिन्दु नगरपालिका, वार्ड नं. ९,<br>नवलपुर, नवलपरासी, नेपाल । |


प्रथम संस्करण वि.सं. २०७३ (सन् २०१६)

ISBN 978-9937-0-1827-2

वितरक : जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति
(The Root and Locus Movement) र
जरो र किलो नेपालमा भएको अन्तर्राष्ट्रिय शक्ति
(The Root and Locus International Movement)

मुद्रक : डिजिटल प्रिन्टलिङ्क, भक्तपुर
०१-६६२०५५५, digitalprintlink@gmail.com

# प्राक्कथन

“राष्ट्र”, “राष्ट्रियता”, “राज्य” बारे प्रत्यक्षतः वा परोक्षतः प्राचीनकालदेखि नै चिन्तन हुँदै आएको छ । उक्त चिन्तनको परम्परामा विभिन्न दृष्टिकोण रहेका छन् । युरोप-केन्द्रित प्रतिमानअनुसार प्रजाति, जाति, सम्प्रदाय, समुदाय, भाषा, भौगोलिकता आदिलाई “राष्ट्र” को परिभाषामा प्राथमिक मानी कित्ताकाट गर्ने सोचले “राष्ट्रराज्य” (Nation State), “द्वि-राष्ट्रिय राज्य” (Two-Nation State), “बहु-राष्ट्रिय राज्य” (Plurinational State / Multi-Nation State) जस्ता अवधारणा अगाडि आए । तर, वैदिक, बौद्ध, किराती, जैन, बोन आदि परम्परामा “राष्ट्र” जुन अवधारणा छ, त्यसलाई युरोप-केन्द्रित प्रतिमानअनुसार परिभाषित गर्न मिल्दैन । “राज्यराष्ट्र” (State Nation) सिद्धान्त अनुसार, भू-राजनीतिक-वैधानिकता प्राप्त एउटा निश्चित भौगोलिक सीमाबद्ध “राज्य” नै “राष्ट्र” हो, जुन स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न हुन्छ र जहाँ विविध प्रजाति, जाति, भाषा, संस्कृति, सम्प्रदाय, समुदाय, भौगोलिक क्षेत्र आदिको समन्वयबाट समष्टिकृत “राष्ट्रियता” निर्धारण भएको हुन्छ । प्रस्तुत पुस्तकमार्फत् “राज्यराष्ट्र” (State Nation) को सिद्धान्त अगाडि ल्याइएको छ, जहाँ “राष्ट्र”, “राष्ट्रियता”, “राज्य” सम्बन्धी मौलिक रैथाने अवधारणा उजागर गरिएको छ ।

प्रस्तुत पुस्तकको प्रकाशन गरी “राज्यराष्ट्र” को सङ्कथनलाई प्रवर्धन गर्न विशिष्ट योगदान पुर्‍याउनु हुने श्री रामहरि शर्मा र उहाँका सुपुत्र श्री अर्जुन शर्मालाई साधुवाद छ ।

डा. निर्मलमणि अधिकारी

डा. गोविन्दशरण उपाध्याय

# प्रकाशकीय



ब्रह्मलीन नगेन्द्रराज गैह्रे र ब्रह्मलीन बाटुलादेवी गैह्रे

प्रस्तुत पुस्तकको प्रकाशन ब्रह्मलीन आमा बाटुलादेवी गैह्रे र ब्रह्मलीन बुबा नगेन्द्रराज गैह्रेको पुण्य स्मृतिमा गरिएको हो । राज्यराष्ट्र अवधारणा र सिद्धान्तको प्रवर्धनमार्फत् नेपाल र सारा संसारकै कल्याण गर्ने प्रयत्नमार्फत् म मेरा आमा-बुबालाई श्रद्धाञ्जली अर्पण गर्छु । हाम्रो परम्परामा “राष्ट्र” लाई आमाको स्वरूपमा मानिने हुनाले “राष्ट्र” एवं “राष्ट्रियता” बारे सिद्धान्त समेटिएको प्रस्तुत पुस्तकको प्रकाशनको अवसरमा आमाको स्मृतिमा केही शब्दहरु लेख्नु सान्दर्भिक नै हुनेछ भन्ने मलाई लागेको छ ।

आमा असल नारीहरुमध्येकी एक नारी हुनुहुन्थ्यो । वहाँ परमात्माप्रति निष्ठावान हुनुहुन्थ्यो । वहाँको विचारमा परिपूर्णता थियो । वहाँको बुद्धिमा दिव्यता थियो र दृष्टिमा पवित्रता थियो । आमा दयावान नारी हुनुहुन्थ्यो । जहाँ जो सुकै कलिला नानी बाबु बालबालिका अलपत्र वा बेसहारा देख्नु भयो भने वहाँले तिनीहरुको राम्रो संरक्षण तथा पालन पोषण गर्न तुरुन्तै लागिपर्नु हुन्थ्यो । कलिला नानी बाबुलाई सेवा गर्न पाउँदा वहाँको मन तथा अनुहारमा सन्तुष्टि छाएको देखिन्थ्यो । पुनर्जन्ममा विश्वास राख्न नचुक्ने आमाले बाल, वृद्धाहरुको सेवामा धेरै वर्ष बिताउनु भयो ।

हाम्रो घर तनहुँ जिल्लाको बूढाकोट भन्ने ठाउँमा थियो, जुन ठाउँमा गाउँमा बसोबास र बेँसीमा पाखो फाँट र खोलापारी खेत भएको फाँट थियो । मौसम अनुसारको खेती बाली लगाउन र गोड्न तथा भित्र्याउने बेलामा बोक्न उठाउन गाउँ बेँसी आवतजावत गरिरहन पर्दथ्यो । दु:खका साथ किसानी कार्यमा लागेर पनि टुहुरा असहाय बालबालिकाको लागि जुनसुकै मूल्य चुकाएर पनि पालन पोषण गर्न तम्सिनु हुन्थ्यो ।

तनहुँ, भिमाद भन्दा माथि एउटा गाउँमा सुत्केरी भएपछि बालिकाको न्वारान नहुँदै ती बालिकाकी आमाको मृत्यु भएछ । आमाले त्यो बच्चाको दु:खको अवस्था देखेर, आफू पनि सुत्केरी अवस्थाकी छँदाछँदै, ती बालिका जन्मेको छ दिनमा नै ल्याएर खुशीसाथ दश वर्ष पालन पोषण गर्नु भयो । जुन बालिका आज पनि जीवितै छन्, कास्की जिल्लाको मालमुल भन्ने ठाउँमा । उनको नाउँ मैले जानेको मैना तिवारी । उनी हुन् पदमराज तिवारीकी आमा ।

फेरि केही समयपछि आमाले एकजना वृद्धा अलपत्र अवस्थामा देख्नु भएछ । वृद्धाको नाउँ थियो तुलसीदेवी गैह्रे । वृद्धा ८० वर्ष तुल्य जस्तै हुनुहुन्थ्यो । वहाँलाई पनि दुई वर्ष जति लालनपालन गर्नु भयो ।

तेस्रो घटना छ : ८० वर्ष पनि नाघेकी दमयन्ती सुवेदीलाई पनि

दुई वर्ष लालन पालन स्याहार गरेर पाल्नुभो । यति मात्रै हैन, वहाँलाई मृत्युको संस्कार समेत सिद्ध गरेर निस्वार्थ काजकृया समेत पार लगाउनु भयो ।

वहाँको वाणीमा मधुरता थियो, कर्ममा प्रवीणता र कलामा निपूर्णता थियो, व्यवहारमा सरलता र जीवनमा सत्यता थियो । आमाले अत्यन्तै सहनशील नारी हुनुहुन्थ्यो । त्यति मात्रै हैन, धैर्यशाली र दयालु हुनुहुन्थ्यो । आमामा आत्मबल भरिपूर्ण थियो, व्यावहारिक कार्य कुशलता थियो र न्याय अन्याय छुट्याउने क्षमता प्रशस्त थियो ।

आमाको जीवनको पहिलो र मध्य भागमा नेपालका प्राय: गाउँहरुमा शिक्षण संस्थाहरु त्यति थिएनन्, तर पनि आफ्ना सन्तानप्रति पढाउन र शिक्षित बनाउन पर्छ भन्ने गहिरो चेष्टा थियो । बाह्र वर्षसम्म गण्डकीको टापुमा बसेर तपस्या गरेर तपसी नाउँले ख्याति प्राप्त गरेका तपसी हरिप्रसाद कंडेल तथा कुन्ती कंडेलबाट १९७७ सालमा जन्मेर १९९० सालमा विवाह बन्धनमा बाँधिनु भएकी ४ छोरा, ४ छोरी जन्माएकी आमाले आफूले राम्रोसँग किताबी ज्ञान आर्जन गर्न नसके पनि शिक्षाको मर्म गहिरो हिसाबले बुझ्नु भएको थियो ।

आमाबाट व्यावहारिक जीवनका लागि उपयोगी ज्ञानका साथै अध्यात्म ज्ञान पनि पाएको आज पनि मलाई स्मरण छ। चरित्रको निर्माण गर, मानव जगत्को कल्याणका लागि चरित्रले नै सर्वोपरि स्थान ओगटेको छ भन्ने आमाको उपदेश सदैव सान्दर्भिक छ । आजको मानव समाज अशान्ति र अतृप्तिको भुमरीतिर फसेर बर्बादीतिर धकेलिन पुगेको छ, जो असल चरित्र अभावको कारणले नै हो । जसले गर्दा आजको विश्वमा तोडफोड, आतंक, अराजकता फैलिएको छ, जुन चरित्रहीनताको कारणले नै हो ।

आमा-बुबालाई श्रद्धाञ्जली अर्पण गर्ने क्रममा मेरो लेखनी आमाको महिमागानमा केन्द्रित रह्यो किनभने देशलाई पनि आमा मान्ने हाम्रो

संस्कार भएकाले प्रस्तुत पुस्तकको विषयवस्तुसँग आमा कतै त कतै जोडिनु भएको छ। आज यो संसारमा वहाँको भौतिक शरीर रहेन। वहाँको आत्मा परमात्मामा विलीन भई वहाँ ब्रह्मलीन हुनु भएको विश्वास हामीले लिएका छौँ ।

देशलाई “राज्यराष्ट्र” मान्ने सिद्धान्तको प्रवर्धनबाट मातृभूमिको सेवा हुने विश्वास गर्दै प्रस्तुत पुस्तकको प्रकाशन गर्ने सौभाग्य पाएकोमा पुस्तकका लेखकलाई धन्यवाद टक्र्याउँदै लेखनीलाई विश्राम दिन चाहन्छु।

**रामहरि शर्मा**
मध्यबिन्दु नगरपालिका, वार्ड नं. ९,
नवलपुर, नवलपरासी, नेपाल ।

# विषयसूची

# १
# अथातो 'राज्यराष्ट्र' जिज्ञासा

"राष्ट्रराज्य" (Nation State) भनेको के हो ?

"द्वि-राष्ट्रिय राज्य" (Two-Nation State) भनेको के हो ?

"बहु-राष्ट्रिय राज्य" (Plurinational State / Multi-Nation State) भनेको के हो ?

के हो "राज्यराष्ट्र" (State Nation) ?

"राष्ट्रराज्य", "द्वि-राष्ट्रियता", "बहु-राष्ट्रियता" तथा "राज्यराष्ट्र" बारे विमर्श गरी "राज्यराष्ट्र" को सिद्धान्तीकरण नै प्रस्तुत पुस्तिकाको मुख्य उद्देश्य रहेको छ ।

यस पुस्तिकाले वास्तवमा नेपाल एक "राज्यराष्ट्र" (State Nation) हो भन्ने तथ्यलाई उजागर गरी नेपाली राष्ट्रियताको अद्यावधिक परिभाषा एवं व्याख्या गर्ने आधारशिला प्रदान गर्नेछ । साथै, "राज्यराष्ट्र" अवधारणा एवं सिद्धान्तका दृष्टिकोणबाट संसारका जुनकुनै पनि देशको राष्ट्रियतालाई परिभाषा एवं व्याख्या गर्न सकिने हुनाले उपर्युक्त सार्वजनीन सिद्धान्तीकरणको आधारशिला पनि प्रस्तुत पुस्तिका बन्ने अपेक्षा छ ।

# २
# समस्या कथन

कुनै पनि स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देशलाई युरोपेली-परम्परागत-अवधारणाको भू-राजनीतिक-वैधानिक परिभाषाअनुरूप "राष्ट्रराज्य" (Nation State) मान्ने/भन्ने सामान्य प्रचलन रहिआएको छ । त्यस मानेमा नेपाल एक "राष्ट्रराज्य" हो भनिँदा सबैले स्वाभाविक मान्दै आएको अवस्था थियो । तर, नेपालको पछिल्लो परिवेशलाई ख्याल गर्दाचाहिँ अब त्यसरी यथेष्ट सोचविचारबिनाको मनाइ/भनाइले नपुग्ने देखिइसकेको छ ।

नेपाल सङ्कटै सङ्कटको सङ्क्रमणकालबाट गुज्रिँदै आएको पनि धेरै समय भइसक्यो । हिंसात्मक द्वन्द्व र जनप्रदर्शनमूलक आन्दोलनको समीकरणले "नयाँ नेपाल" को अवधारणालाई राजनीतिक हिसाबले मूलधारमा ल्याएपछि "राज्य पुनः संरचना" को सवाल पनि उत्तिकै प्रबल बन्यो । नेपाली राष्ट्रियताको परिभाषा, व्याख्या एवं विश्लेषण अब परम्परागत तरिकाले गरेर हुँदैन भन्ने तर्कसँगै अब नेपाली राष्ट्रियतालाई "नयाँ" ढङ्गले परिभाषा, व्याख्या, विश्लेषण गर्नु पर्छ भन्ने माग पनि अगाडि आयो ।

जति समय बित्दो छ, उति नै नेपालको "राज्य पुनः संरचना" झन् झन् जटिल सवालका रूपमा जेलिँदै गरेको देखिन्छ । घृणाको जगमा

उभिएर *सङ्कीर्ण-राष्ट्रियतावादी सिद्धान्तका* अनुयायीहरूले "द्विराष्ट्रिय राज्य" वा "बहुराष्ट्रिय राज्य" को नारालाई उरालेर विघटनको अन्त्यहीन शृङ्खलालाई प्रारम्भ गर्न खोजिरहेको वर्तमान परिप्रेक्ष्यमा आन्तरिक तथा बाह्य अनेक पक्षहरू पनि नेपालको द्वन्द्वमा सक्रिय रहेका हुनाले सो जटिलतामा बढोत्तरी हुँदै गइरहेको छ ।

नेपाल "राष्ट्रराज्य" वा "द्विराष्ट्रिय राज्य" वा "बहुराष्ट्रिय राज्य" वा "राज्यराष्ट्र" मध्ये के हो र के हुनुपर्छ भन्ने आधारभूत सवालमा यथेष्ट तथा राम्ररी सवाल-जवाफ, वादविवाद, चिन्तन, मनन, विमर्श नगरुन्जेलसम्म एकातिर नेपालको "राज्य संरचना" बारे नै उपर्युक्त ज्ञान हुँदैन भने झन् "राज्य पुन: संरचना" को सवालको वैज्ञानिक समाधान त कसरी होला र ! तसर्थ "नेपाल के हो ?" भन्ने प्रश्नमा पर्याप्त विचार विमर्श गरी "नेपाल एक राज्यराष्ट्र हो" भन्ने निष्कर्षमा पुग्नु वर्तमान नेपालको अवधारणात्मक, वैचारिक, सैद्धान्तिक प्राथमिकता हो ।

"बहु-राष्ट्रियता" को माग कतिपय पक्षबाट अगाडि सारिएको हुनाले अब "राष्ट्रराज्य", "द्विराष्ट्रिय राज्य", "बहुराष्ट्रिय राज्य" तथा "राज्यराष्ट्र" बारे सवाल-जवाफ, वादविवाद, चिन्तन, मनन, विमर्श गर्नै पर्ने आवश्यकता खडा भएको छ ।

नेपाल एक "राज्यराष्ट्र" हो भन्ने सत्य तथ्यलाई जनमानसमा स्थापित गराउनु पनि हाम्रो मुख्य कार्यभारमै पर्ने जिम्मेवारी हो । वास्तवमा, "राष्ट्रराज्य" (Nation State) भनेको के हो, "द्विराष्ट्रिय राज्य" (Two-Nation State) भनेको के हो, "बहुराष्ट्रिय राज्य" (Plurinational State / Multi-Nation State) भनेको के हो तथा "राज्यराष्ट्र" (State Nation) भनेको के हो भन्ने सवालहरूमा प्रशस्त अन्वेषण नगरी नेपाली राष्ट्रियताको अद्यावधिक व्याख्या गर्न सम्भव छैन । "राज्यराष्ट्र" को विमर्शले नेपालीजनको हितका निमित्त सकारात्मक सङ्कथनको आवश्यकतालाई सम्बोधन गर्छ । "राज्यराष्ट्र" को सैद्धान्तिक आधारशिलाले नेपाली राष्ट्रियताको अद्यावधिक व्याख्या एवं नेपालको सुदृढिकरणका निमित्त समेत निर्णायक प्रभाव पार्नेछ ।

सोही निर्णायक प्रभावले सङ्कटै सङ्कटको सङ्क्रमणकालबाट गुज्रिँदो वर्तमान नेपाललाई समाधानको निमित्त एक सुनिश्चित निकास मिल्नेछ ।

समकालीन विश्वमा पहिचानको राजनीति (Identity politics) ले सबैजसो देशहरूलाई चुनौती खडा गरेको छ । परम्परागत "राष्ट्रराज्य" अवधारणाको दृष्टिकोणबाट गरिएका "राष्ट्रियता" का परिभाषा एवं व्याख्यालाई अस्वीकार गर्दै कतै "द्विराष्ट्रियता" त कतै "बहुराष्ट्रियता" का दाबीहरूले कोलाहल मच्चाइरहेका देख्न सकिन्छ। बर्खे च्याउ झैँ उब्जिएका साना साना "राष्ट्रियता" का अहङ्कारी महत्वाकांक्षाहरूलाई "राष्ट्रराज्य" अवधारणाले न सम्बोधन गर्न सक्छ, न त निराकरण नै गर्न सक्छ । संसारभरि नै राज्यको स्थिरताका निमित्त *उदार-राष्ट्रियतावादी सिद्धान्त*को आवश्यकता रहेको परिप्रेक्ष्यमा "राज्यराष्ट्र" अवधारणाको सिद्धान्तिकरण वाञ्छनीय भएको हो ।

# ३
# 'राज्यराष्ट्र' लाई सिद्धान्त किन भनिएको हो ?

सबै अवधारणाहरू सिद्धान्तको तहमा विकास हुँदैनन, तर सबै सिद्धान्तहरूको मूलमा अवधारणाहरू नै हुन्छन् । "राज्यराष्ट्र" लाई हामी सिद्धान्तकै रूपमा लिन्छौं ।

"राज्यराष्ट्र" (State Nation) अवधारणामा "राज्य" (State) र "राष्ट्र" (Nation) दुईवटा शब्दहरू समन्वित छन् । "राज्यराष्ट्र" मा राज्य शब्दलाई अगाडि (विशेषणको स्थानमा) र राष्ट्र शब्दलाई पछाडि (विशेष्यको स्थानमा) राखिनुले यो अवधारणाबाट एक विशिष्ट तात्पर्य बोध हुन्छ । अर्थात्,

"राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व हो भन्ने सैद्धान्तिक मान्यताको द्योतक हो "राज्यराष्ट्र" अवधारणा ।

"राज्यराष्ट्र" लाई सिद्धान्त (Theory) का रूपमा मान्न सकिने सुस्पष्ट कारणहरू छन् ।

पहिलो, विभिन्न प्रमेयहरू (राज्य, राष्ट्र, राष्ट्रियता आदि) लाई परिभाषा गर्न तथा राष्ट्रियता-सम्बद्ध परिघटनाबारे विज्ञानसम्मत विधिबाट विवरण प्रस्तुत गर्न सक्ने आधार "राज्यराष्ट्र" मा पाइन्छ । अर्थात्,

परिभाषात्मक एवं विवरणात्मक प्रकार्य (Definition and Description) को निमित्त यो सक्षम छ ।

दोस्रो, “राज्यराष्ट्र” को दृष्टिकोणबाट राष्ट्रियता-सम्बद्ध परिघटनाको रीतपूर्वक र प्रणालीबद्ध (Systematic) व्याख्या गर्न सकिन्छ । अर्थात्, व्याख्यात्मक प्रकार्य (Explanation) को निमित्त यो सक्षम छ ।

तेस्रो, सम्बद्ध परिघटनाका विभिन्न कारण (Cause) र असर (Effect) को अन्तर्सम्बन्धको विश्लेषण गरी भविष्यत् परिणामबारे पनि “राज्यराष्ट्र” को दृष्टिकोणबाट आँकलन गर्न पनि सकिन्छ । अर्थात्, विधेयात्मक प्रकार्य (Prediction) को निमित्त यो सक्षम छ ।

चौथो, कुनै पनि परिपूर्ण सिद्धान्तले “नियन्त्रण” (Control) प्रकार्य समेत गर्न सक्ने मापदण्ड पनि “राज्यराष्ट्र” ले पूरा गर्छ । “राज्यराष्ट्र” केवल अवधारणात्मक तहमा मात्र सीमित नरही यसका मान्यताहरूलाई व्यवहारमा लागू गर्न सकिने एवं सोही अनुसार राष्ट्रियताको व्यावहारिक कार्यान्वयन, राज्यको संरचना, नागरिक तथा राजनीतिक अधिकारको प्रचलन, सांस्कृतिक अधिकारको प्रचलन आदिमा निर्णायक प्रभाव पर्ने हुनाले यसको नियन्त्रणात्मक प्रकार्य स्पष्टै छ ।

यसरी, “राज्यराष्ट्र” एक सिद्धान्त हो किनभने यसले कुनै पनि सिद्धान्तका चारवटा प्रकार्यहरू समेटी आधुनिक सिद्धान्तका सबै विशेषताहरू पूरा गर्छ ।

# ४
# दुईथरि सिद्धान्त बोकेका चारवटा अवधारणाहरू

"राज्यराष्ट्र" अवधारणा एवं सिद्धान्तको विमर्श गर्ने क्रममा यसका प्रतिस्पर्धी अवधारणाहरू ("राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य", "बहु-राष्ट्रिय राज्य") बारे पनि परिचर्चा गर्नु पर्ने हुन्छ । वास्तवमा, वर्तमान नेपालका परिप्रेक्ष्यमा

राष्ट्रियताको अद्यावधिक व्याख्या गर्नका निमित्त दुईथरि सिद्धान्त बोकेका उक्त चारवटा अवधारणाहरूलाई राम्ररी बुझ्नु अनिवार्य छ ।

"राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य", "बहु-राष्ट्रिय राज्य" तथा "राज्यराष्ट्र" – उपर्युक्त चारवटा शब्दावलीमध्ये अघिल्ला तीनवटाको अवधारणात्मक, वैचारिक, सैद्धान्तिक आधार समान रहेको छ – "उही मुलाको सिन्की, उही मुलाको चाना" भनेझैं । तर, "राज्यराष्ट्र" को अवधारणात्मक, वैचारिक, सैद्धान्तिक आधारचाहिँ तिनीहरूभन्दा पृथक् हो ।

तसर्थ, दार्शनिक दृष्टिकोणबाट वर्गीकरण गर्ने हो भने "राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" भन्ने मान्यताहरू एक ध्रुवमा र "राज्यराष्ट्र" भन्ने मान्यताचाहिँ अर्को ध्रुवमा खडा हुने देखिन्छ। यस्तो पृष्ठभूमिमा "राज्यराष्ट्र" भन्ने मान्यतालाई एक सिद्धान्त र "राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" भन्ने मान्यताहरूलाई अर्को सिद्धान्त भन्न सकिन्छ। हाम्रो विमर्शको सहजताको प्रयोजनले "राष्ट्रराज्य",

"द्वि- राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" भन्ने अवधारणाहरूलाई समेट्ने सिद्धान्तलाई *सङ्कीर्ण-राष्ट्रियतावादी सिद्धान्त* भन्न सकिन्छ ।

युरोपमा "राष्ट्रियता" को उद्भव एवं "राज्य" को संरचना हुने क्रममा स्थापित भएका "राष्ट्रराज्य", "द्वि-राष्ट्रियता" एवं "बहु-राष्ट्रियता" मान्यताहरूले एउटा यस्तो सिद्धान्तलाई प्रवर्धन गरे, जसको आधारशिलाको रूपमा "राष्ट्र" को सङ्कीर्ण परिभाषा रहेको छ। यस्तो सङ्कीर्ण परिभाषालाई पूँजीवादी र कम्युनिस्ट/समाजवादी दुवैथरिले अवलम्बन गरेको हुनाले यो साझा "कपू" (कम्युनिस्टंपूँजीवादी) सिद्धान्त हो। लेनिनवादी "बहु-राष्ट्रियता" को आधारशिला पूँजीवादी "राष्ट्रराज्य" अवधारणा नै हो, जसमा पृथक् पृथक् "राष्ट्र" हरूलाई एउटै भू-राजनीतिक-वैधानिक संरचनामा कसरी समेट्ने भन्ने सवाललाई एक किसिमले हल गर्न खोजिएको हो। "राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" सबैलाई समेट्ने साझा "कपू" सिद्धान्तको विश्लेषण गर्ने हो भने अन्तर्यमा सङ्कीर्ण पार्थक्यवादी, वैभिन्न्यवादी, अहङ्कारवादी, घृणावादी सोच रहेको तथ्य उजागर हुन्छ ।

"राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" लाई मान्ने *सङ्कीर्ण-राष्ट्रियतावादी सिद्धान्तले* प्रजाति (Race), जाति (Ethnicity, Tribe, Clan), भाषा (Language), धार्मिक सम्प्रदाय (Religion), सांस्कृतिक पहिचान (Cultural Identity), क्षेत्रीय पहिचान (Regional Identity) आदिलाई "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषाका लागि प्राथमिक तत्व मान्छ। अर्थात्, यो सिद्धान्तले स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश ("राज्य") को भू-राजनीतिक-वैधानिक अस्तित्वलाई "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषाका लागि प्राथमिक तत्व मान्दैन। पुरानो युरोपेली मान्यताले "राष्ट्र" (Nation) र "राज्य" (State) लाई अलग अलग तत्वहरू मान्छ – जसमध्ये "राष्ट्र" लाई पूर्ववर्ती र "राज्य" लाई परवर्ती मानिन्छ र कतिपय अवस्थामा "राष्ट्र" र "राज्य" ले समान संरचनालाई जनाउने तथा अन्य कतिपय अवस्थामा अलग अलग तत्वहरूलाई जनाउने गरी ती संज्ञाको प्रयोग भएको हुन्छ ।

युरोप-केन्द्रित प्रतिमान (Eurocentric Paradigm) ले प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिका आधारमा "राष्ट्र" को परिभाषा गर्ने भएकाले हिजोका युरोपेली देशमा जस्तो "एकल" पहिचान हुँदासम्म "प्रतिस्पर्धी राष्ट्रियताहरूको सङ्घर्ष" को अवस्था नरहने, तर नेपाल, भारतजस्ता वैविध्यपूर्ण देशहरूमाचाहिँ "प्रतिस्पर्धी

राष्ट्रियताहरूको सङ्घर्ष" लाई मलजल पुग्ने र तिनको पृथकतावादी दुरुत्साह बढ्ने अवस्था रहने देखिन्छ। युरोपेली "राष्ट्रराज्य" को ढाँचालाई मान्ने हो भने कुनै एउटा देशमा अस्तित्वमान पृथक् पृथक् प्रजाति, जाति, जात, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदि सबै नै "राष्ट्र" का हैसियतमा विकास हुन सक्ने भनेर मान्नु पर्ने हुन्छ। अनि प्रत्येक "राष्ट्र" ले ढिलो वा चाँडो "राज्य" को हैसियत प्राप्त गर्ने महत्वाकाङ्क्षा राख्ने हुनाले सोही "राष्ट्र" को मान्यताका आधारमा "राज्य" को संरचनामा जोड दिनु नै युरोप-केन्द्रित प्रतिमानको प्राथमिकतामा पर्छ। तसर्थ, युरोपेली मान्यतामा आधारित "राष्ट्रराज्य" मा देश ("राज्य") को भू-राजनीतिक-वैधानिक अस्तित्व गौण रही जहिले पनि "प्रतिस्पर्धी राष्ट्रियताहरूको सङ्घर्ष" को बीज विद्यमान रहन्छ। "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" मा त झन् "प्रतिस्पर्धी राष्ट्रियताहरूको अन्त्यहीन सङ्घर्ष" को सम्भावना प्रबल नै हुन्छ।

"राज्यराष्ट्र" सिद्धान्तले स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश ("राज्य") को भू-राजनीतिक-वैधानिक अस्तित्वलाई "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषाका लागि प्राथमिक तत्व मान्छ। स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश ("राज्य") मा विद्यमान जुन-कुनै पनि प्रजाति, जाति, जात, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई समष्टिकृत दृष्टिकोणबाट आफूभित्रै समाहित, समन्वित, सुसंयोजित गर्ने हुनाले "राज्यराष्ट्र" ले उक्त पृथक् पृथक् अवयवहरूलाई परस्पर विरोधी, प्रतिस्पर्धी ठान्दैन र तिनीहरू "राष्ट्र" का हैसियतमा विकास हुन सक्ने मानिँदैन। तसर्थ "राज्यराष्ट्र" मा "राष्ट्रियताहरूको

सङ्घर्ष” का निमित्त कुनै स्थान हुँदैन । नेपाल र नेपालजस्तै जातीय, भाषिक, साम्प्रदायिक आदि विविधतायुक्त देशका लागि आफ्नो स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न “राज्य” को हैसियतलाई सदैव सुदृढ बनाउने सिद्धान्त “राज्यराष्ट्र” (State Nation) नै हो ।

“राष्ट्रराज्य”, “द्वि-राष्ट्रिय राज्य” एवं “बहु-राष्ट्रिय राज्य” भन्ने मान्यताहरूको मूलमा जुन सिद्धान्त रहेको छ, त्यो युरोप-केन्द्रित (Eurocentric) सिद्धान्त हो । “राज्यराष्ट्र” सिद्धान्तचाहिँ नेपाल-केन्द्रित (Nepal-centric) हो । हाम्रोभन्दा पृथक् परिवेशमा उद्भव भएको युरोप-केन्द्रित प्रतिमान (Eurocentric Paradigm) र हाम्रो मौलिक रैथाने नेपाल-केन्द्रित प्रतिमान (Nepal-centric Paradigm) बीचको टकराव आजको ज्वलन्त यथार्थ हो ।

# ५
# नेपाल-केन्द्रित विरुद्ध युरोप-केन्द्रित प्रतिमान

हाम्रोमा “ब्रह्माण्डीय एकता” एवं “विश्वबन्धुत्व” जस्ता बृहद्मा अति बृहद् मान्यताका साथै “ग्राम” जस्ता विशेषमा अति विशेष संरचनासम्मको सैद्धान्तिक आधार वैदिक सभ्यता एवं वाङ्मयमै देखिन्छ। “राज्य”, “राष्ट्र” एवं “राष्ट्रियता” को सैद्धान्तिक आधार पनि वैदिक सभ्यता एवं वाङ्मयमै छ । वैदिक साथै बौद्ध, जैन, किराती, बोन लगायतका परम्परामा पनि उपर्युक्त सैद्धान्तिक दृष्टिमा मतैक्य नै रहेको छ। समष्टिमा, मौलिक रैथाने नेपाली दृष्टिमा “राज्य” एवं “राष्ट्र” परस्पर विरोधी त के, पृथक् तत्व नै होइनन्; प्रत्युत “राज्य” एवं “राष्ट्र” स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देशलाई जनाउने समानार्थक संज्ञा हुन् । मौलिक रैथाने नेपाली मतमा “राज्य” नै “राष्ट्र” हो एवं “राज्य” बाट नै “राष्ट्रियता” निःसृत हुने हो ।

तर, युरोपेली सभ्यतामा “राज्य” को निर्माण गर्ने क्रममा हाम्रोभन्दा फरक दृष्टिकोण अवलम्बन भयो । तत्कालीन युरोपेली सभ्यतामा विचार वैभिन्न्य नरहेको होइन, तथापि त्यहाँको प्रबलतम् प्रतिमान (Dominant Paradigm) ले “राज्य” र “राष्ट्र” लाई पृथक् पृथक् तत्व मान्यो । उक्त युरोपेली प्रतिमान अनुसार, प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई “राष्ट्र” निर्माणको आधार मानियो ।

सकेसम्म त्यसरी अस्तित्वमान "राष्ट्र" को नै स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न "राज्य" को रूपमा भू-राजनीतिक-वैधानिक हैसियत हुनु वाञ्छनीय मानियो । युरोपमा राष्ट्र-राज्य (नेशन-स्टेट) को अवधारणाअनुसार नै फ्रान्स, जर्मनी, ब्रिटेन, इटाली आदि देशहरू अस्तित्वमा आए ।

कतिपय अवस्थामा एकभन्दा बढी प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई एउटै भू-राजनीतिक-वैधानिक संरचनामा समावेश गर्नु पर्ने रणनीतिक/व्यावहारिक अवस्थालाई सम्बोधन गर्न युरोपेली प्रतिमानमा "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" भन्ने मान्यता अगाडि ल्याइएको देखिन्छ । पहिलेको चेकोस्लोभाकिया जस्ता "द्वि-राष्ट्रिय" र स्वीजरल्याण्ड, पहिलेको सोवियत सङ्घ एवं युगोस्लाभियाजस्ता "बहु-राष्ट्रिय" संरचनाहरू यसरी नै बनेका थिए ।

वास्तवमा "राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" जस्ता संरचनालाई आवश्यकताजनित सम्झौताका रूपमा मात्र युरोपेली प्रतिमानले स्वीकारेको हो । तत्कालीन युरोपको भू-सांस्कृतिक-राजनीतिक यथार्थलाई ख्याल राखी अवलम्बन गरिएका उपर्युक्त मान्यताहरूले विभिन्न देशहरूको भू-राजनीतिक-वैधानिकताको निक्यौल गर्न मद्दत पुर्‍याएका थिए । तर, त्यो पुरानो सिद्धान्त युरोपमै समेत असान्दर्भिक भइसकेको छ भने "राष्ट्रराज्य", "द्वि-राष्ट्रियता" एवं "बहु-राष्ट्रियता" मान्यताहरूलाई समेट्ने युरोप-केन्द्रित प्रतिमान एवं "कपू" सिद्धान्तले वर्तमान नेपालमा नेपाली राष्ट्रियतामाथि गम्भीर चुनौती खडा गरेको अवस्था छ ।

युरोपेली प्रतिमान अनुसार, कुनै एउटा देशमा अस्तित्वमान पृथक् पृथक् प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदि सबै नै "राष्ट्र" का हैसियतमा विकास हुन सक्ने भएकाले "द्वि-राष्ट्रिय" र "बहु-राष्ट्रिय" संरचनाको विघटन जुन-कुनै बेलामा पनि

हुन सक्ने सम्भावना अत्यधिक रहन्छ। त्यस्तो विघटनले घृणा र हिंसालाई नै मलजल गर्छ। जातीय, भाषिक, साम्प्रदायिक, भौगोलिक आदि विविधतायुक्त देश नेपालले आफ्नोलागि असान्दर्भिक युरोपेली प्रतिमान अवलम्बन गर्नु त "प्रतिस्पर्धी राष्ट्रियताहरूको अन्त्यहीन सङ्घर्ष" को कहिल्यै निको नहुने रोगलाई निम्त्याउनेजस्तो गल्ती हुनेछ ।

"राज्यराष्ट्र" (State Nation) मा प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई प्रतिस्पर्धी तत्वहरू नमानी राज्यका विविध अवयव मानेर बृहत्तर एकताका आधारमा सुसंयोजन गरिने हुनाले यसमा "प्रतिस्पर्धी राष्ट्रहरू" एवं "प्रतिस्पर्धी राष्ट्रियताहरू" लाई स्थान हुँदैन । यसमा त "राज्य" लाई केन्द्रमा राखी "राष्ट्रियता" को परिभाषा एवं प्रचलन हुन्छ । युरोप-केन्द्रित प्रतिमान (Eurocentric Paradigm) र नेपाल-केन्द्रित प्रतिमान (Nepal-centric Paradigm) बीचको टकरावमा हाम्रो मौलिक रैथाने नेपाल-केन्द्रित प्रतिमानको विजयका लागि "राज्यराष्ट्र" सिद्धान्त अगाडि ल्याउनु परेको हो ।

# ६
# राष्ट्रराज्य

युरोपको उदाहरणबाट चर्चा सुरु गरौं । जुन बेलामा युरोपमा राष्ट्रियताले आकार ग्रहण गर्दै थियो, त्यति बेलाको प्रबलतम युरोपेली प्रतिमानले "राष्ट्र" लाई पूर्ववर्ती र "राज्य" परवर्ती मान्यो । परिणाम के भयो भने युरोपमा राष्ट्रियतालाई "राष्ट्रराज्य"(Nation State) अवधारणाबाट परिभाषित गरियो ।

"राष्ट्रराज्य" (Nation State) मा पनि "राज्यराष्ट्र" (State Nation) मा झैं "राज्य" (State) र "राष्ट्र" (Nation) दुईवटा शब्दहरू नै समन्वित छन्, तर शब्दहरूको क्रम फरक तरिकाले राखिएको छ । "राज्यराष्ट्र" मा राज्य शब्दलाई अगाडि (विशेषणको स्थानमा) र राष्ट्र शब्दलाई पछाडि (विशेष्यको स्थानमा) राखिएको छ भने "राष्ट्रराज्य" मा राष्ट्र शब्दलाई अगाडि (विशेषणको स्थानमा) र राज्य शब्दलाई पछाडि (विशेष्यको स्थानमा) राखिएको छ । अर्थात्, "राज्यराष्ट्र" मा "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व हो भने "राष्ट्रराज्य" मा मानिसको जन्मको आधारमा निर्धारित हुने प्रजाति, जाति जस्ता तत्त्वलाई "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त निर्णायक मानेको देखिन्छ । युरोपेली प्रतिमान (European Paradigm) को यो मान्यताले प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान आदिका आधारमा युरोपभित्र अनेक "राष्ट्र" हरू पहिचान गरिए ।

त्यतिबेलाको परिवेशमा उनीहरूका लागि यो सहज पनि रह्यो होला : ब्रिटेन कसको ? ब्रिटिशको । फ्रान्स कसको ? फ्रेन्चको । जर्मनी कसको ? जर्मनको । इटाली, हल्याण्ड, डेनमार्क, फिनल्याण्ड, रसिया, स्पेन, अरु अरु पनि देश हेरौँ; उही प्रतिमानले निर्णायक भूमिका खेलेको छ । पुरानो युरोपेली प्रतिमानमा स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश ("राज्य") को भू-राजनीतिक-वैधानिक अस्तित्वलाई निर्धारण केले गरेको छ त ? मूलमा छ उही मान्यता :– प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान आदि फरक परेपछि ती अलग अलग "राष्ट्र" हुन्, त्यसैले तिनीहरूको "राष्ट्रियता" भिन्न भिन्न हो र तिनीहरू अलग अलग "राज्य" हुनु नै वाञ्छनीय हो ।

अर्थात्, वैभिन्न्यलाई निर्णायक मानेर बनेका व्यष्टिमूलक (Particularist) एकाइ थिए युरोपेली देशहरू । हरेक एकाइसँग एक-आपसमा अन्तर्घुलन नभएका विभिन्न जनसमुदाय, फरक भाषा, फरक सांस्कृतिक पहिचानका साथसाथै अलग्गै रहेका भू-खण्डसमेत रहेकाले नै ब्रिटिशको ब्रिटेन, फ्रेन्चको फ्रान्स, जर्मनको जर्मनी आदि इत्यादि भन्दै पृथक् पृथक् "राष्ट्र" को परिकल्पना गरी सोहीअनुसार "राज्य" को संरचना गर्ने परिस्थिति तत्कालीन युरोपमा बनेको थियो ।

तत्कालीन युरोपेली सन्दर्भमा "राष्ट्रराज्य" अवधारणाले विभिन्न भू-सांस्कृतिक-राजनीतिक एकाइहरूलाई "राष्ट्रियता" को आधारमा पहिचान, सीमाङ्कन एवं भू-राजनीतिक-वैधानिकताको निक्यौंल गर्न मद्दत पुर्‍याएको थियो । यद्यपि तत्कालीन युरोपमा फरक भाषा तथा फरक सांस्कृतिक पहिचान भएका एकाइहरूसँग अलग्गै अलग्गै भू-खण्ड साथै एक-आपसमा अन्तर्घुलन नभएका विभिन्न जनसमुदाय भएकाले नै "राष्ट्रराज्य" अवधारणाले सकारात्मक योगदान दिएको थियो; अन्यथा एउटै देशभित्र "प्रतिस्पर्धी राष्ट्रहरू" एवं "प्रतिस्पर्धी राष्ट्रियताहरू" को किचलो हुने थियो । उक्त हिसाबले मूल्यांकन गर्दा "राष्ट्रराज्य" अवधारणा हिजोको युरोपका लागि वरदान साबित भएको तथ्य उजागर हुन्छ ।

आधुनिक शक्ति संरचनामा युरोपेली-अमेरिकी प्रतिमानको प्रभुत्व बढ्दै जाँदा अन्य भूभागहरूमा पनि "राष्ट्रराज्य" (नेशन-स्टेट) अवधारणा अनुसार नै राष्ट्रियताको व्याख्या हुन थाल्यो। प्रत्यक्ष औपनिवेशिक शासन (Direct colonial rule) को समाप्तिसँगै बेलायत, फ्रान्स तथा अन्य युरोपेली मुलुकका पहिलेका उपनिवेशहरूको स्वतन्त्रताका क्रममा नयाँ नयाँ देशहरू बन्दै जाँदा तिनीहरूलाई पनि "राष्ट्रराज्य" (नेशन-स्टेट) भनियो । कहिल्यै औपनिवेशिक शासन अन्तर्गत नरहेका देशहरूले समेत देखासिकीमा आफूलाई "राष्ट्रराज्य" (नेशन-स्टेट) भने । इतिहासको अभिनिर्मित विश्लेषण (Constructed analysis) तथा अर्थापन (Interpretation) का साथै तत्काल सत्तारुढ शक्तिसंरचनाको अनुकूल प्रवर्धित संकथनहरूका आडमा नेपाल, भारत, पाकिस्तान, अफगानिस्तान, दक्षिण अफ्रिका, संयुक्त राज्य अमेरिका, क्यानाडा आदि जस्ता देशहरूलाई समेत "राष्ट्रराज्य" (Nation State) भन्ने एवं मान्ने अयथार्थपूर्ण व्यवहार देखियो ।

नेपाल, इण्डिया आदि देशलाई "राष्ट्रराज्य" भन्नु जरुरी पनि थिएन र औचित्यपूर्ण पनि होइन। नेपाल र इण्डियाजस्ता प्राचीन भारतवर्षका उत्तराधिकारी देशहरूका परिप्रेक्ष्यमा "राष्ट्र" को निर्माण प्रजातीय, जातीय, भाषिक, साम्प्रदायिक आदि आधार वा मापदण्डबाट भएको होइन। "राष्ट्र" को सङ्कीर्ण परिभाषा गर्ने एवं "राष्ट्र" लाई पूर्ववर्ती र "राज्य" लाई परवर्ती मान्ने युरोपेली दृष्टिकोणलाई वैदिक मान्यताको विपरित देखिन्छ किनभने "राष्ट्र" नै प्रमेय (मुख्य उपादेय तत्व) मानी "राष्ट्र" को व्यावहारिक सार्थकताचाहिँ "राज्य" बाट नै सुनिश्चित हुने मान्यतालाई वेद (विशेषत: अथर्ववेद) एवं वैदिक धाराका सान्दर्भिक शास्त्रहरूले मानेका छन्, जसलाई बौद्ध, जैन, किराती, बोन आदिले पनि आत्मसात् गरेको देखिन्छ । यसरी, साध्यको रूपमा "राष्ट्र" र साधनको रूपमा "राज्य" रही समष्टिमा (साधन र साध्यको अभिन्न पारस्परिक सम्बन्धको कारणले) "राज्य नै राष्ट्र" (State as Nation) स्वरूपमा विकास हुने भन्ने बौद्ध, जैन, किराती, बोन आदिको मान्यता भएकाले नेपाल, इण्डिया र अन्य कैयौं देशहरूलाई मौलिक रूपमा राज्यराष्ट्र (State Nation) भन्नु नै यथार्थ-सङ्गत हुन्छ ।

जुन देशहरू मौलिक रूपमा कदापि "राष्ट्रराज्य" थिएनन्, तिनीहरूलाई समेत किन "राष्ट्रराज्य" भनिएको होला त ? राज्यराष्ट्र अवधारणाको यथेष्ट सिद्धान्तीकरण नभइसकेको अवस्थामा, जसरी पनि देशलाई एकीकृत राख्नै पर्ने व्यावहारिक बाध्यतावश राष्ट्रराज्य अवधारणाकै मनगढन्ते अर्थापन गर्ने उक्त तरिकाको काइते व्यवहार गरिएको थियो भन्ने बुझ्न सकिन्छ। अब राज्यराष्ट्र (State Nation) को सिद्धान्तीकरणसँगै उक्त तरिकाको काइते व्यवहारको कुनै आवश्यकता रहँदैन, किनभने राज्यराष्ट्र सिद्धान्तको आलोकमा सहजैसँग नेपाली, भारतीय, पाकिस्तानी, अफगानिस्तानी, दक्षिण अफ्रिकी, अमेरिकी, क्यानाडाली आदि राष्ट्रियताको विज्ञानसम्मत व्याख्या गर्न सकिन्छ। राष्ट्रियताको विज्ञानसम्मत व्याख्या गर्न सकिने राज्यराष्ट्र सिद्धान्त विकास भइसकेको अवस्थामा अब राष्ट्रराज्य अवधारणालाई अँगालिरहनु पर्ने कुनै आवश्यकता छैन।

युरोपका लागि हिजो वरदान साबित भएको "राष्ट्रराज्य" अवधारणा बदलिएको परिस्थितिमा आगामी समयमा श्राप साबित हुने अवस्था देखिएको छ। बसाइँसराइका कारण अब युरोपमासमेत उहिलेजस्तो राष्ट्र-राज्य (नेशन-स्टेट) को अवस्था कायम रहने अवस्था क्रमश: क्षीण हुँदै गइरहेको छ। जस्तै :– अहिलेको ब्रिटेन पहिलेझैँ ब्रिटिश जनताको मात्र घर होइन; प्रत्युत अनेकौँ जातीय, धार्मिक, सांस्कृतिक समुदायहरूको सङ्गमस्थल बन्दै गइरहेको छ। अहिलेको फ्रान्स वा अन्य युरोपेली देशको नियति पनि उही हो। अब परम्परागत युरोपेली प्रतिमानले परिभाषित गर्ने "नेशन-स्टेट" को अवधारणाले आजको बेलायत वा फ्रान्स वा अरु युरोपेली देशलाई पनि पटक्कै समेट्न सक्दैन। अनि प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान आदि फरक परेपछि ती अलग अलग "राष्ट्र" हुने, तिनीहरूको "राष्ट्रियता" पनि भिन्न भिन्न हुने र सोही अनुरूप अलग अलग "राज्य" हुनु पर्ने पुरानो युरोपेली प्रतिमान लागू गर्न पनि पटक्कै मिल्दैन; किनभने हिजोजस्तो एक-आपसमा अन्तर्घुलन नभएको जनसमुदाय, फरक भाषा, फरक सांस्कृतिक पहिचानका साथसाथै अलग्गै रहेका भू-खण्डसमेत रहेका व्यष्टिमूलक (Particularist) एकाइ अब छैनन् वा निकट भविष्यमै रहने छैनन्।

प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान आदि फरक परेपछि "राष्ट्र" नै फरक पर्ने हो भने त अब लण्डनका वा पेरिसका मुसलमानले स्वतन्त्र इस्लामी राज्य माग्ने परिस्थितिलाई निम्त्याउँछ। तर क्रिस्चियन र मुसलमान (वा अरु) का बस्तीहरू छ्यासमिस भएकाले उनीहरूसँग अलग्गै अलग्गै भू-खण्ड त छैनन् । यस्तो पृष्ठभूमिमा पुरानो युरोपेली प्रतिमानअनुसार "राष्ट्र" लाई पूर्ववर्ती र "राज्य" परवर्ती भन्न/मान्न न बेलायतले सक्छ, न फ्रान्सले सक्छ, न त अरु कुनै पनि देशले यस्तो जोखिमलाई स्वीकार्न सक्छ। आफ्नो अस्तित्व नै खतरामा पर्ने अवस्थामा कुनै पनि देशले आफूभित्र "प्रतिस्पर्धी राष्ट्रियताहरू" लाई स्थान दिन चाहँदैन र सक्दैन पनि ।

अर्थात्, आजको बेलायतले वा फ्रान्सले हिजोजस्तो प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान आदि फरक परेपछि ती अलग अलग "राष्ट्र" हुने, तिनीहरूको "राष्ट्रियता" पनि भिन्न भिन्न हुने र सोही अनुरूप अलग अलग "राज्य" हुनु पर्ने पुरानो युरोपेली प्रतिमान अवलम्बन गर्न सक्दैनन्; प्रत्युत त्यहाँ पनि राज्य-राष्ट्र (स्टेट-नेशन) नै अस्तित्वमान भइरहेको अवस्था हो । संयुक्त राज्य अमेरिकामा त उक्त पुरानो युरोपेली प्रतिमान लागू हुने अवस्थै नभएकाले त्यहाँ सुरुदेखि नै राज्य-राष्ट्र (स्टेट-नेशन) को अवधारणाअनुरूप देश बनेको हो ।

युरोपेली प्रतिमानले नयाँ परिस्थितिमा एकत्वलाई बुझाउन "राष्ट्रियता" भन्ने र विविधतालाई अर्थ्याउन "सांस्कृतिक-राष्ट्रियता" (कल्चरल-नेशनालिटी) को अवधारणालाई अगाडि सार्ने गरेको पाइन्छ । तर, हिजो अर्कै परिस्थितिमा बनेको राष्ट्र-राज्य (नेशन-स्टेट) अवधारणा, मान्यता, सिद्धान्तलाई पूर्णतः विस्थापन गर्न र राज्यराष्ट्र सिद्धान्तको पर्याप्त मूलप्रवाहीकरण हुन नसकेसम्म विघटनको खतराबाट कदापि मुक्त हुन सक्नेवाला छैनन् उतिबेला "नेशन-स्टेट" स्वरूपमा संरचित देशहरू । उनीहरूले कि त पार्थक्य, वैभिन्न्य, व्यष्टिप्रधानतामा आधारित "राष्ट्रराज्य" (Nation State) मान्यतालाई अवधारणात्मक, वैचारिक, सैद्धान्तिक

आधारबाटै नामेट पार्न सक्नु पर्छ; अन्यथा प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिको अहङ्कारबाट निःसृत नयाँ नयाँ "राष्ट्र" हरूबीचको महत्वाकाङ्क्षाले भविष्यमा पैदा गर्ने "प्रतिस्पर्धी राष्ट्रियताहरूको अन्त्यहीन सङ्घर्ष" को कष्टप्रद द्वन्द्वको परिणाम भोग्नु पर्ने हुन्छ । नेपाल, भारतजस्ता देशमा त प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचानका साथसाथै गोत्र र जात (Caste) समेत राजनीतिक महत्वाकाङ्क्षाका बहाना बन्ने सम्भावना रहेको थप जटिलतापूर्ण अवस्था छ ।

"राष्ट्रराज्य" अवधारणा वास्तवमा एक विषवृक्षका रूपमा मौलाएको देखिन्छ – जसको मूलमा पार्थक्य, वैभिन्न्य, व्यष्टिप्रधानता छ र जसले नितान्त जन्मका आधारमा पैदा हुने जातीय अहङ्कारवाद, घृणावाद र हिंसात्मक द्वन्द्वलाई मलजल गर्छ । यो यस्तो अवधारणा हो, जसले जाति, रङ्ग, भाषा आदिका आधारमा भेद गर्छ । युरोपमा जन्मेको फासिवाद (Fascism) तथा नाजिवाद (Nazism) र दक्षिण अफ्रिकामा विगतको रङ्गभेदी शासन "राष्ट्रराज्य" अवधारणाकै परिणति हो भन्दा अत्युक्ति हुँदैन । अहिले अल कायदा, इस्लामिक स्टेट, बोको हराम आदि इत्यादिको मूलमा पनि सङ्कीर्ण पार्थक्यवादी, वैभिन्न्यवादी, अहङ्कारवादी, घृणावादी सोच छ । पुरानो युरोपेली प्रतिमानले स्थापित गरेको "राष्ट्रराज्य" मान्यता र अहिले इस्लाम धर्मका नाममा उब्जेका इस्लामिक स्टेटजस्ता सङ्कीर्ण पार्थक्यवादी, वैभिन्न्यवादी, अहङ्कारवादी, घृणावादी सोचले "प्रतिस्पर्धी राष्ट्रियताहरूको अन्त्यहीन सङ्घर्ष" लाई मलजल गर्छन् ।

पुरानो युरोपेली प्रतिमान अनुसारको "राष्ट्रराज्य" को अवधारणाले अराजकतालाई निम्त्याउने सम्भावना रहन्छ भन्ने तथ्य कथित सील्याण्ड (Sealand) को उदाहरणबाट सहजै उजागर हुन्छ । इंग्ल्याण्डको समुद्री तटबाट करिब १२ किलोमिटर परको दूरीमा रहेको, समुद्रमा दुई पिल्लरमाथि निर्मित किल्ला एचएम फोर्ट रफ्स् (HM Fort Roughs) वा रफ्स् टावरका एकजना निवासीले त्यसको नाम सील्याण्ड (Sealand) राखेर

आफ्नो निवास एक स्वतन्त्र "राष्ट्र" हो भन्ने दाबी गरे। उनको निधनपछि उनका छोराले आफूलाई सील्याण्डको राष्ट्राध्यक्ष तथा सरकार प्रमुख भनेर दाबी गरिरहेका छन्। समुद्रमा दुई पिल्लरमाथि निर्मित, एक व्यक्तिको स्वामित्वमा रहेको, सानो कृत्रिम संरचनालाई समेत स्वतन्त्र "राष्ट्र" भनेर दाबी गर्न मिल्ने आधार प्रदान गर्ने पुरानो युरोपेली "राष्ट्रराज्य" अवधारणा कति हास्यास्पद रहेछ भन्ने यो ज्वलन्त प्रमाण हो।

"राष्ट्र" र "राज्य" लाई अलग अलग परिघटनाका रूपमा हेर्ने युरोपेली प्रतिमानले "राष्ट्रवाद" (Nationalism) र "देशभक्ति" (Patriotism) लाई पनि अलग अलग मानेर परिभाषित गर्छ। कतिपय पश्चिमा अध्येताहरू तथा तिनका अनुयायी अन्य व्यक्तिहरूले पनि "राष्ट्रवाद" लाई नकारात्मक, सङ्कीर्ण, विभेदकारी मानेर आलोचना गरेको तथा त्यसको विकल्पमा "देशभक्ति" ले राष्ट्रिय चरित्र बोक्ने भनी विश्लेषण गरेको सन्दर्भ पनि यही हो, जसले "राष्ट्रराज्य" अवधारणामा रहेको विसङ्गतिलाई उजागर गर्छ।

प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदि फरक पर्नासाथ "राष्ट्र" नै अलग हुने भन्ने/मान्ने पुरानो युरोपेली प्रतिमानलाई मानिरहने हो भने विघटनको अन्त्यहीन शृङ्खला पैदा हुन्छ। वास्तवमा, ढिलो/चाँडोको कुरा मात्र हो; "राष्ट्रराज्य" को शक्ति कमजोर भई त्यसैबाट "द्वि-राष्ट्रिय राज्य" ("Two-Nation State") वा "बहु-राष्ट्रिय राज्य" ("Plurinational State") र ("Multi-Nation State") को नाममा हिंसात्मक सङ्घर्षका लागि निहुँ तयार हुन्छ। "राष्ट्रराज्य" अवधारणाबाटै उब्जेका भए तापनि "द्वि-राष्ट्रियता" र "बहु-राष्ट्रियता" मान्नेहरूले पूर्ववर्ती "राष्ट्रराज्य" अवधारणालाई अस्वीकार गर्छन् – माकुराका बच्चाले माउलाई नै आहारा बनाएझैँ। नेपालमा "द्वि-राष्ट्रियता"/"बहु-राष्ट्रियता" का पक्षधर विभिन्न जातीय, क्षेत्रीय, सङ्कीर्ण घृणावादीहरूले उनीहरूका माउ पार्टी भए तापनि काङ्ग्रेस, एमाले, पूर्वपञ्चका पार्टीहरूलाई नामेट पार्न खोज्नुको कारण यो पनि हो –

काङ्ग्रेस, एमाले, पूर्वपञ्चका पार्टीहरू नेपाललाई "राष्ट्रराज्य" मान्छन् ।

मधेशकेन्द्रित र कथित जनजातिवादी पार्टीहरूले "द्वि-राष्ट्रियता"/"बहु-राष्ट्रियता" का नारा उराल्दै गर्दा एमालेका थुप्रै व्यक्तिहरूले "नेपाल राष्ट्रराज्य हो" भनेर बहस गर्न अगाडि आएका देखिएको छ । त्यो बहसमा उनीहरूको सरोकार नेपाली राष्ट्रियतालाई बलियो बनाउने रहेको भनेर मान्दिने हो भने पनि एमालेको सैद्धान्तिक धरातल निकै कमजोर देखिन्छ । पहिलो, "राष्ट्रराज्य" अवधारणा आफैँमा कमजोर धरातलमा रहेको र त्यसले प्रकारान्तरले "द्वि-राष्ट्रियता" र "बहु-राष्ट्रियता" लाई नै मलजल गर्ने तथ्यचाहिँ उनीहरूलाई ज्ञान भएको देखिँदैन । दोस्रो, "द्वि-राष्ट्रियता" र "बहु-राष्ट्रियता" लाई संसारभरि कम्युनिस्ट/समाजवादीहरूले मलजल गरेको र लेनिनवादको उप-उत्पादनका रूपमा जन्मेको "बहु-राष्ट्रियता" नेपालमा विषवृक्ष बनेर मौलाएको तथ्यप्रति पनि उनीहरू जवाफदेही बनिरहेका छैनन् । यसरी, आफूलाई "एमाले" भन्ने उक्त दल (पार्टी) ले सरासर सैद्धान्तिक बेइमानी गरेको तथ्य उजागर हुन्छ । एमालेको भन्दा ज्यादा भद्रगोलको अवस्थामा देखिन्छन् काङ्ग्रेसी र पूर्वपञ्च पार्टीका अनुयायीहरू । उनीहरूका आधिकारिक दस्ताबेज हेर्दाचाहिँ काङ्ग्रेस, एमाले, पूर्वपञ्चका पार्टीहरू नेपाललाई "राष्ट्रराज्य" मान्छन् भन्ने नै देखिन्छ । नेपाल हजारौँ वर्षको इतिहास भएको जीवन्त "राज्य" भएको कारणले यहाँका निवासीहरू एक "राष्ट्रियता"-विशेषको सूत्रमा समन्वित भई नेपाल आज एक समष्टिकृत "राष्ट्र" बनिसकेको छ भन्ने तर्क एमाले लगायतका "राष्ट्रराज्य-वादी" को हो भने त्यस तर्कमा नेपाली राष्ट्रियतालाई बलियो बनाउने सरोकार रहेको भन्न सकिने भए तापनि युरोपेली चस्माबाट हेरेर नेपाललाई "राष्ट्रराज्य" भनी गरिने व्याख्याचाहिँ यथार्थ-सङ्गत होइन । नेपालको "राष्ट्रियता" को यथार्थ-सङ्गत व्याख्या "राज्यराष्ट्र" सिद्धान्तका आलोकमा गर्न सकिन्छ ।

# ७
# द्वि-राष्ट्रियता

कुनै देश भू-राजनीतिक-वैधानिक हिसाबले एक स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश ("राज्य") भएतापनि उक्त देशमा दुईवटा अलग अलग "राष्ट्र" हरू छन् भन्ने दृष्टिकोण नै "द्वि-राष्ट्रियता" हो । जस्तै : नेपालभित्र मधेशी र पहाडी अलग अलग "राष्ट्र" हरू भएको दाबी गर्नेहरू "द्वि-राष्ट्रियता-वादी" हुन् ।

कतिपय अवस्थामा दुईवटा एकाइहरूलाई समन्वय, सहअस्तित्व एवं सहकार्यका लागि "द्वि-राष्ट्रियता" ले आधार प्रदान गरी सकारात्मक योगदान दिने सम्भावना हुन्छ । पहिले अलग्गै अलग्गै रहेका दुई प्रतिस्पर्धी एकाइहरू कुनै बृहत्तर एकताको आधार पहिल्याएर एउटै भू-राजनीतिक-वैधानिक संरचनामा समेटिन सके भने यो त "द्वि-राष्ट्रियता" ले दिएको सकारात्मक योगदान नै मान्नु पर्छ । तर, पहिल्यैदेखि एकीकृत देशमा यदि "द्वि-राष्ट्रियता" को नारा उरालेर "प्रतिस्पर्धी राष्ट्रहरू" एवं "प्रतिस्पर्धी राष्ट्रियताहरू" खडा गर्ने प्रयत्न भएको छ भनेचाहिँ यसले अहित गर्छ । तथ्यका आधारमा भन्ने हो भने "द्वि-राष्ट्रियता" ले मानव समाजलाई अहित गरेका धेरै दृष्टान्त छन् ।

जब कुनै राज्यको जन्म नै पूर्ववर्ती बृहत्तर राज्यभित्रका विविध एकाइहरूलाई अलग अलग "राष्ट्र" मान्ने अवधारणाबाट हुन्छ भने त्यसरी

जन्मेको राज्यले आफ्नो थप विभाजनलाई रोक्ने सैद्धान्तिक आधार हुँदैन । हो, सैन्यबल लगायतका व्यावहारिक आधारबाट पृथकतावादी सङ्घर्षलाई दबाएर विभाजन रोक्ने उपाय नरहने होइन, तर त्यस्तो तरिका आफ्नै निमित्त प्रत्युत्पादक हुन सक्ने सम्भावना जहिल्यै रहन्छ ।

बेलायती उपनिवेश रहेको तत्कालीन इण्डियाको उदाहरणबाट चर्चा सुरु गरौँ । आफूलाई "हिन्दू नेता" मान्ने सावरकर र आफूलाई "मुस्लिम नेता" मान्ने जिन्ना – ती दुईजनाबीच के समानता थियो ? दुवैजना प्रत्यक्षतः वा परोक्षतः "धार्मिक पहिचान" का आधारमा "राष्ट्र" को परिभाषा गर्थे । ती दुवैजनाको समान मान्यता थियो कि हिन्दू र मुसलमान अलग अलग "राष्ट्र" हुन् । हो, सावरकर र जिन्ना दुवैजनाले "द्वि-राष्ट्रियता" सिद्धान्त मान्थे । उनीहरूबीचमा मत वैभिन्न्य यत्ति थियो :– सावरकरका अनुसार इण्डिया हिन्दूहरूको स्वाभाविक "राज्य" हुनु पर्छ भने जिन्नाका अनुसारचाहिँ मुसलमानहरूका लागि मुसलमानको बहुलता भएका स्थानहरू समेटिएको छुट्टै "राज्य" हुनु पर्छ । तत्कालीन इण्डियाको विभाजनबाट वर्तमान इण्डिया र पाकिस्तान (बङ्गलादेशसहित) बन्नुको मुख्य कारक सोही "द्वि-राष्ट्रियता" अवधारणा नै थियो । पाकिस्तानबाट बङ्गलादेश टुक्रिनुको कारक पनि "द्वि-राष्ट्रियता" सिद्धान्त नै थियो – यतिबेलाचाहिँ "भाषिक पहिचान" का आधारमा "राष्ट्र" को परिभाषा भयो । यदि "धार्मिक पहिचान" मात्र "राष्ट्र" एवं "राष्ट्रियता" को आधार हुनेभए पाकिस्तान र बङ्गलादेश अलग अलग स्वतन्त्र देशहरू हुने नै थिएनन् ।

तत्कालीन ब्रिटिश इण्डियाबाट दुईवटा "राष्ट्र" हरू – इण्डिया र पाकिस्तानको जन्मको सैद्धान्तिक आधार निकै कमजोर थियो । विभाजनको बेलामा लिइएको "द्वि-राष्ट्रियता" मापदण्डलाई तत्काल नत्यागेको भए त्यसले "बहु-राष्ट्रियता" लाई प्रवेश गराई इण्डियाको थप विभाजन अवश्यम्भावी थियो भन्न सकिने आधार हैदराबाद, खालिस्तान, नागाल्याण्ड, कश्मिर आदिका उदाहरणले देखाउँछ । वास्तवमा, इण्डियाले प्राचीन भारतवर्षको सांस्कृतिक विरासतको कारणले (सैद्धान्तिक स्पष्टता नहुँदाको

अवस्थामा पनि) "राज्यराष्ट्र" को मर्मलाई केही हदसम्म भए पनि व्यवहारमा अवलम्बन गर्न सकेको कारणले नै थप विभाजन रोक्न सकेको हो । उता, पाकिस्तानले आफ्नो जन्मको कारक "द्वि-राष्ट्रियता" को ऐतिहासिकतासँग आफूलाई अलग्याउन नसकेको कारणले तत्कालीन पूर्वी पाकिस्तान अलग्गै देश (बंगलादेश) बन्ने परिस्थिति निम्त्यायो र अद्यापि बलुचिस्तान, सिन्ध, गिल्गिट बाल्तिस्तान आदि क्षेत्रमा पृथकतावादलाई मलजल पुगेको छ ।

"द्वि-राष्ट्रियता" को ऐतिहासिकतासँग आफूलाई अलग्याउन नसकेको खण्डमा पाकिस्तानको अक्षुण्णता कायमै रहन बडो मुश्किल देखिन्छ, किनभने वर्तमान पाकिस्तानको सरहदभित्र "बहु-राष्ट्रियता"-जन्य लडाइँको मूल नै त्यहीँबाट फुटेको छ । इण्डियाको परिप्रेक्ष्यमा कुरा गर्ने हो भने, आधिकारिक औपचारिक तवरले उक्त देशले स्वतन्त्रताको बिन्दुबाटै आफूलाई "द्वि-राष्ट्रियता" को छायाँबाट मुक्त पारेको हो तापनि वर्तमान इण्डियाको सरहदभित्र "द्वि-राष्ट्रियता-वादी" (जस्तै : हिन्दू विरुद्ध मुस्लिम) तथा "बहु-राष्ट्रियता-वादी" अवधारणाहरू सङ्घर्षरत छन् र कुनै पनि बेला प्रबल बन्न सक्छन् । प्राचीन भारतवर्षको "राज्यराष्ट्र" मान्यता अनुरूप चल्नु नै आधुनिक इण्डियाको राष्ट्रियताको सुदृढीकरणको उपाय हो ।

रुवाण्डाको त्रासदीले हामीलाई देखाउँछ कि "द्वि-राष्ट्रियता" सिद्धान्त कति खतरनाक छ भनेर । अफ्रिकी देश रुवाण्डामा हुतु र तुत्सी समुदाय फरक फरक जातीय पहिचान भएकाले तिनीहरू फरक फरक "राष्ट्र" हुन् भन्ने सङ्कीर्ण सोच प्रवर्धन हुँदै जाँदा हिंसात्मक गृहयुद्ध एवं त्रासद् नरसंहारको अवस्था आयो ।

श्रीलङ्कामा पनि "द्वि-राष्ट्रियता" सिद्धान्तकै आधारमा धेरै वर्ष हिंसात्मक द्वन्द्व मच्चियो । सिंहाली र तमिल समुदायबीचमा विविधताबीचको एकत्व अस्वीकार गर्नेहरूले "राष्ट्रियता" को सङ्कीर्ण, जातीय/भाषिक अहङ्कारवादी, घृणा-आधारित परिभाषालाई बोकेर हिँड्दा त्यहाँ पनि हिंसात्मक गृहयुद्ध एवं त्रासद् नरसंहारको अवस्था आयो ।

इजरायल र प्यालेस्टाइनबीचको समस्या झन् झन् जब्बर बन्दै गइरहेको छ यही “द्वि-राष्ट्रियता” सिद्धान्तकै कारणले। “राज्यराष्ट्र” सिद्धान्त बमोजिम यदि इजरायली र प्यालेस्टाइनीलाई धार्मिक पहिचानलाई सांस्कृतिक अधिकारका क्षेत्रमा जीवन्त राखी नागरिक तथा राजनीतिक अधिकार एउटै साझा राज्यका नागरिकका हैसियतमा सुनिश्चित हुने परिस्थिति बनाउन सकिएको भए हिंसा र आतंकको शृंखला टुट्ने थियो । तर युरोपेली सन्दर्भमा बनेको “राष्ट्रराज्य” को वैचारिक प्रदूषणबाट जन्मेको “द्वि-राष्ट्रियता-वादी” दृष्टिकोणले इजरायली र प्यालेस्टाइनीलाई पुस्तौँसम्म शत्रु शत्रुको व्यवहारमा फसाएको छ ।

“द्वि-राष्ट्रियता” को कारणले पीडितहरूको सूचीमा साइप्रस पनि छ । छिमेकी/विदेशीको समेत सहभागितामा प्रवर्धित “द्वि-राष्ट्रियता” को बिखालु प्रहारले साइप्रस दुई टुक्रामा विभाजित भएर रहेको छ। साइप्रसलाई साइप्रसकै हितको हिसाबबाट हेर्न नसकेर टर्केली र ग्रीसेली हितका हिसाबबाट कित्ताकाट गर्ने औजार “द्वि-राष्ट्रियता” नै हो ।

“राष्ट्र” र “राज्य” लाई अलग अलग परिघटनाका रूपमा हेर्ने युरोपेली प्रतिमानमै आधारित रहेको हुनाले “द्वि-राष्ट्रियता” का अनुयायीहरूले पनि “राष्ट्रवाद” (Nationalism) र “देशभक्ति” (Patriotism) लाई अलग अलग मानेर परिभाषित गर्छन्। “द्वि-राष्ट्रियता” अवधारणाको मूलमा पनि, “राष्ट्र राज्य” मा झैँ नै, सङ्कीर्ण पार्थक्यवादी, वैभिन्न्यवादी, अहङ्कारवादी, हुन्छ र त्यसलाई “बहु-राष्ट्रियता” ले विस्थापित गराउँछ ।

*सङ्कीर्ण-राष्ट्रियतावादी सिद्धान्त*अन्तर्गतका तीनवटा अवधारणाहरू (राष्ट्रराज्य, द्वि-राष्ट्रियता, बहु-राष्ट्रियता) मध्ये सैद्धान्तिक र व्यावहारिक सबै हिसाबले “द्वि-राष्ट्रियता” सबैभन्दा कमजोर छ ।

“राष्ट्रराज्य” सँग इतिहासको अभिनिर्मित विश्लेषण(Constructed analysis) तथा अर्थापन (Interpretation) का साथै तत्काल सत्तारुढ शक्तिसंरचनाको अनुकूल प्रवर्धित संकथनहरूको आड रहेको हुन्छ । “द्वि-राष्ट्रियता” ले उक्त तत्त्वहरूलाई कमजोर पार्ने भएको हुनाले

“राष्ट्रराज्य-वादी” (तत्काल सत्तारुढ शक्तिसंरचना) र “द्वि-राष्ट्रियता-वादी” अनिवार्य लडाइँमा फस्छन् । “राष्ट्रराज्य-वादी” ले कि त “द्वि-राष्ट्रियता-वादी” समक्ष हार स्वीकार्नु पर्छ, कि त सकेसम्मको शक्ति प्रयोग गरेर “द्वि-राष्ट्रियता-वादी” लाई सिध्याएको देखिन्छ । इण्डिया र पाकिस्तानको विभाजन तथा पाकिस्तान र बंगलादेशको विभाजनका साक्ष्यहरूका साथै लेबनान, रुवाण्डा, श्रीलंका आदि देशका साक्ष्यहरूबाट पनि सहजै बुझ्न सकिन्छ कि यस्तो लडाइँमा जनधनको बेहिसाब खति हुन्छ ।

बाह्य (पराइ) शक्तिको निर्णायक हस्तक्षेप निम्त्याइएको अवस्थामा बाहेक सामान्यतया तत्काल सत्तारुढ शक्तिसंरचनाले, आफ्नो देशलाई अखण्ड राख्ने अधिकारको वैधानिकताका आडमा, “द्वि-राष्ट्रियता-वादी” को सफाया गरेको विभिन्न देशको ऐतिहासिक तथ्य देखिन्छ । “द्वि-राष्ट्रियता-वादी” ले बाह्य (पराइ) शक्तिको परोक्ष वा प्रत्यक्ष मद्दत लिएको अवस्थामा पनि परिस्थिति जुनकुनै बेला उनीहरूकै प्रतिकूल हुन सक्ने तथ्यलाई भिण्डरावाले (खालिस्तान), प्रभाकरण (तमिल इलम), बुग्ती (बलुचिस्तान) आदिका घटनाले देखाएकै छन् ।

“द्वि-राष्ट्रियता-वादी” ले जुन आधारमा पृथक् राष्ट्रियताको दाबी गरेको हो (भाषा, संस्कृति, भौगोलिक विशिष्टता), उस्तै समानता भएका समुदाय छिमेकी देशमा समेत रहेछन् भने त झन् स्थिति थप जटिल बन्छ । टर्की, इराक र सिरियामा बाँडिएका कुर्द समुदायको नाममा कुर्दिस्तानको प्रसंग यहाँनेर सान्दर्भिक छ, जहाँ कुर्दिस्तानी पृथकताको पक्ष र विपक्षमा भएका हिंसाको शृंखला रोकिने छेकछन्द देखिएको छैन । बलुचिस्तानको पृथकतावादी संघर्षसँग वर्तमान पाकिस्तान, अफगानिस्तान र इरानको समेत सरोकार रहेको छ र उक्त तीनैवटा देशहरूले बलुचिस्तानी पृथकतालाई दबाउन हरसम्भव शक्ति प्रयोग गर्छन् नै । “द्वि-राष्ट्रियता” कै जस्केलोबाट पसेर विदेशीहरूले साइप्रसलाई विभाजन गराएको घटनाबाट पनि धेरै पाठ सिक्न सकिन्छ । मुख्यत: इण्डियाको सरहदभित्र संघर्षरत कामतापुरका

पृथकतावादीहरूले वर्तमान नेपाल र बंगलादेशका केही अंशमा समेत दाबी गरेका हुनाले कामतापुरी पृथकतावादलाई नामेट पार्नुमा इण्डिया, नेपाल र बंगलादेशको साझा स्वार्थ देखिन्छ ।

तमिल इलमको माग लिएर सुरु भएको पृथकतावादी लडाइँलाई जुन छिमेकी देशले मलजल गर्‍यो, सोही देशले कालान्तरमा श्रीलंका सरकारको पक्षमा प्रत्यक्ष सैन्य परिचालन समेत गरेको ऐतिहासिक पक्ष यहाँनेर स्मरणीय छ। नेपालमा “द्वि-राष्ट्रियता-वादी” दृष्टिकोणबाट मधेशको व्याख्या हुँदै जाँदा नेपालको मधेशसँग जोडिएको छिमेकी देश इण्डियाको भूभागमा पनि भाषा, संस्कृति, भौगोलिक विशिष्टता आदिका आधारमा उस्तै पृथकतावादी दृष्टिकोण बढ्नेछ र अन्ततोगत्वा इण्डियाले समेत पृथक् मधेशको विरुद्धमा कठोर कार्बाही गर्नेछ भनी विश्लेषण र आँकलन गर्ने पर्याप्त वस्तुनिष्ठ (Objective) आधार देखिन्छ ।

केवल दुईवटा मात्र प्रजाति, जाति, धार्मिक समुदाय, भाषिक समुदाय आदिको उपस्थिति भएको भूभाग कहिँ अपवाद बाहेक सामान्यतया हुँदैन । त्यसैले एकबाट दुईको कुरा उठ्नासाथ, चाँडो वा ढिलो, त्यो विघटनात्मक अर्थापन (Divisive interpretation) ले उत्तरोत्तर संख्यात्मक वृद्धिलाई निम्त्याउँछ। यसको तात्पर्य के हो भने कसैले केही आधार लिएर “द्वि-राष्ट्रियता” को माग अगाडि सार्‍यो भने तत्कालै नभए पनि केही समयपछि नै अर्कोले उही वा अर्कै आधार लिएर पृथक्, प्रतिस्पर्धी वा वैरी राष्ट्रियताको नारा उरालिहाल्छ। तसर्थ, “द्वि-राष्ट्रियता” त एउटा जस्केलो मात्र हो, जसबाट अन्ततोगत्वा “प्रतिस्पर्धी राष्ट्रियताहरूको अन्त्यहीन सङ्घर्ष” को स्थिति पैदा हुन्छ, हुन्छ ।

अफ्रिका महादेशमा अवस्थित सुडानबाट “द्वि-राष्ट्रियता” को मापदण्डका कारणले छुट्टै अस्तित्व पाएर दक्षिण सुडान बनेपछि पनि सुडान र दक्षिण सुडानमा विघटनको शृंखला नरोकिनुले के संकेत गर्छ ? एउटा देशबाट दुइटा बनिसकेपछि पनि त्यो भूभागमा रहेका अनेक जातीय समूहहरूका अहङ्कारजन्य पहिचानको राजनीतिले डोर्‍याएको विघटनको कुचक्र थामिने कुनै संकेत छैन ।

तत्कालीन ब्रिटिश इण्डियाको विभाजन गरी इण्डिया र पाकिस्तान बनाएको घटनालाई मात्र हेर्दा एकैछिन सावरकर र जिन्नाका "द्वि-राष्ट्रियता" ले जितेको जस्तो लागे तापनि पाकिस्तानको विघटनबाट बंगलादेशको जन्म तथा वर्तमान भारत र पाकिस्तानका सरहदभित्र अनेकौं पृथकतावादी संघर्षहरू (नागाल्याण्ड, खालिस्तान, बलुचिस्तान आदि) रहेको तथ्यले "द्वि-राष्ट्रियता" अवधारणा कति कमजोर छ भन्ने देखिन्छ ।

नेपालमा मधेश-केन्द्रित राजनीति गर्न "द्वि-राष्ट्रियता" (पहाड र मधेश, पहाडी र मधेशी) को विघटनात्मक अर्थापनको चक्रले मधेशभित्र कोचिला, भोजपुरा, मिथिला, अवध, थरुहट, चुरे भावर, छोटा पाकिस्तान आदि आदिका निहुँमा नटुंगिने कित्ताकाटलाई निम्त्याएको प्रत्यक्ष उदाहरण छ । समुद्रमा दुई पिल्लरमाथि निर्मित, एक व्यक्तिको स्वामित्वमा रहेको, सानो कृत्रिम संरचना (रफ्स् टावर) लाई त स्वतन्त्र "राष्ट्र" भनेर दाबी गरेको देखियो भने नेपालमा विघटनात्मक सङ्घर्ष सुरु गरेपछि सङ्घर्षको टुङ्गो "द्वि-राष्ट्रियता" मै लाग्ला भन्ठान्ने कुनै आधार छैन ।

अर्थात्, "द्वि-राष्ट्रियता" लाई "बहु-राष्ट्रियता" सिद्धान्तले विस्थापित गर्छ, गर्छ । "द्वि-राष्ट्रियता" ले जुन घृणाको विषलाई प्रवर्धन गर्छ, त्यसले देशलाई शनैः शनैः "बहु-राष्ट्रियता" को कोलाहलमा धकेली, अन्ततोगत्वा "प्रतिस्पर्धी राष्ट्रियताहरूको अन्त्यहीन सङ्घर्ष" को भुमरीमा फसाउँछ ।

यसरी, "द्वि-राष्ट्रियता-वादी" हरू जहिल्यै "राष्ट्रराज्य-वादी" र "बहु-राष्ट्रियता-वादी" को दोहोरो चेपमा परेर समाप्त हुने गरेको ऐतिहासिक तथ्यहरूले देखाइसकेका छन् । "द्वि-राष्ट्रियता-वादी" हरू आफू त समाप्त हुन्छन् नै, नेपाल र इण्डिया जस्ता देशमा प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचानका साथसाथै गोत्र र जात (Caste) समेत राजनीतिक महत्वाकाङ्क्षाका बहाना बन्ने सम्भावना रहेको ज्यादै जटिलतापूर्ण अवस्था पनि नभएको होइन । उक्त अवस्थालाई समेत विचार गर्ने हो भने तत्काल थाहा लाग्छ कि "राज्य" र "राष्ट्र" लाई समानार्थक मान्नु नै बुद्धिमत्तापूर्ण एवं विवेकी मान्यता हो । अन्यथा, देश

अनेकौं “प्रतिस्पर्धी राष्ट्रियताहरूको अन्त्यहीन सङ्घर्ष” को भुमरीतर्फ खँगारिन्छ। देशका अनेक प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई प्रतिस्पर्धी तत्वहरू नमानी राज्यका विविध अवयव मानेर बृहत्तर एकताका आधारमा सुसंयोजन गरिने हुनाले राज्यराष्ट्र (State Nation) मा कुनै पनि “प्रतिस्पर्धी राष्ट्रहरू” एवं “प्रतिस्पर्धी राष्ट्रियताहरू” को सङ्घर्षलाई स्थान रहँदैन । तसर्थ “द्वि-राष्ट्रियता-वाद” लाई जति छिटो “राज्यराष्ट्र” (State Nation) सिद्धान्तले परास्त गर्छ, देशको हित उति नै बढी हुन्छ ।

# ८
# बहु-राष्ट्रियता

“बहु-राष्ट्रियता” अवधारणामा एक भू-राजनीतिक-वैधानिक देश (“राज्य”) भित्र अनेक (बहु) संख्यामा “राष्ट्र” हरू रहेका हुन्छन् भन्ने मान्यता रहेको हुन्छ । “राज्य” एकीकृत, तर “राष्ट्र” अनेक । अर्थात्, विविध प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई विभिन्न परिप्रेक्ष्यमा विशेषत: परिभाषित गर्दै अलग अलग “राष्ट्र” हरू मान्ने एवं तिनलाई भू-राजनीतिक-वैधानिक हिसाबले एकीकृत देश (“राज्य”) मा समन्वित गर्न सकिन्छ भन्ने मान्यता नै “बहु-राष्ट्रियता” (Plurinationalism) हो ।

कतिपयले “द्वि-राष्ट्रियता” लाई पनि एक प्रकारको “बहु-राष्ट्रियता” कै रूपमा परिभाषित गर्ने गरेका छन् । “द्वि-राष्ट्रियता” र “बहु-राष्ट्रियता” दुइटैको अवधारणात्मक आधार “राष्ट्रराज्य” (Nation State) सँग मिल्छ । “राष्ट्रराज्य” मा झैं “द्वि-राष्ट्रियता” र “बहु-राष्ट्रियता” मा पनि प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई नै “राष्ट्र” को परिभाषाका निमित्त निर्णायक तत्व मानिन्छ । तिनीहरूबीचको फरक के हो भने “राष्ट्रराज्य” मा एकल प्रजातीय, जातीय, भाषिक आदिलाई आदर्श स्थिति मानिन्छ र “द्वि-राष्ट्रियता” र “बहु-राष्ट्रियता” मा चाहिँ अलग अलग एकाइहरूबीच स्वार्थ, रणनीति, लेनदेन मिलेको अवस्थामा

एक राज्य भित्र दुई वा अनेक “राष्ट्र” हरू बस्न सक्ने मानिन्छ। सामान्यतया “राष्ट्रराज्य”, “द्वि-राष्ट्रियता” र “बहु-राष्ट्रियता” तीनवटैले *सङ्कीर्ण-राष्ट्रियतावादी* दृष्टिकोण अवलम्बन गर्छन् ।

“बहु-राष्ट्रिय राज्य” को पुरानो सफल उदाहरण स्वीजरल्याण्ड मानिन्छ। केही वर्षअगाडि बोलिभियाले “बहु-राष्ट्रिय राज्य” भनेर औपचारिक तवरमै आफूलाई “राष्ट्रराज्य” बाट “बहु-राष्ट्रिय राज्य” मा रूपान्तरण गर्‍यो । एक-आपसमा मौलिक वैर, शत्रुता, विद्वेष रहेका अनेक एकाइहरूले बाध्यतावश सँगसँगै बस्नै पर्ने अवस्थामा “हुन त हामी अनेक राष्ट्र हौँ, तर जसरी पनि सँगसँगै बस्नु परिहाल्यो, लौ त नि ... एउटा तरिका निकालौँ” भन्ने अवस्थामा काम लाग्ने सूत्र हो “बहु-राष्ट्रियता” । त्यस्तै, कुनै कारणवश एकीकृत हुन नसकेर वा नपाएर अलग अलग रहनु परेका अस्थिर राज्यहरू वा राज्य बन्न नसकेका विभिन्न किसिमका एकाइहरूको पारस्परिक स्वार्थलाई व्यवस्थापन गर्ने सूत्रका रूपमा पनि “बहु-राष्ट्रियता” काम लाग्छ । तर यो त “मामा हुँदै नहुनुभन्दा त अपांग मामा भए पनि हुन्थ्यो” भन्ने मनसाय बोकेको एउटा पुरानो नेपाली उखानजस्तै अवस्था हो किनभने “बहु-राष्ट्रिय राज्य” का घटकका रूपमा रहेका कथित राष्ट्रहरूबीचमा जहिले पनि सङ्कीर्ण स्वार्थ, अविश्वास, घृणाको सम्बन्ध रहने हुनाले यस्तो राज्य सदैव कमजोर जगमा उभिएको हुन्छ र कुनै पनि बेला गर्ल्यामगुर्लुम ढल्न सक्छ ।

“राष्ट्र” र “राज्य” लाई अलग अलग परिघटनाका रूपमा हेर्ने युरोपेली प्रतिमानको जगमा उभिएको हुनाले “बहु-राष्ट्रियता” का पक्षधरहरूले “राष्ट्रवाद” (Nationalism) र “देशभक्ति” (Patriotism) लाई अलग अलग मानेर परिभाषित गर्छन् । सतही रूपमा हेर्दा “बहु-राष्ट्रियता” ले एकता, समन्वय, समावेशी व्यवहारको पक्षपोषण गरेको जस्तो देखिएतापनि अवधारणागत तहमा “बहु-राष्ट्रियता” एक नकारात्मक दृष्टिकोण हो किनभने यसमा पनि, “राष्ट्रराज्य” एवं “द्वि-राष्ट्रियता” मा झैँ, मूलतः अविश्वास, घृणा र लेनदेनलाई (साझेदारी होइन) सम्बन्धको आधार बनाइएको हुन्छ

। "बहु-राष्ट्रियता" अवधारणामा पनि प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान आदि फरक परेपछि ती अलग अलग "राष्ट्र" हुन्, त्यसैले तिनीहरूको "राष्ट्रियता" भिन्न भिन्न हो भन्ने *सङ्कीर्ण-राष्ट्रियतावादी* सोच रहेको हुन्छ। विविध एकाइहरूलाई जब अवधारणागत तहमै अलग अलग "राष्ट्र" मानिन्छ भने कुनै पनि बेला सोही पार्थक्यले सङ्कीर्ण अहङ्कारलाई जन्माउन सक्छ र आज एकीकृत "बहु-राष्ट्रिय राज्य" रहेको देशभित्रका "प्रतिस्पर्धी राष्ट्रहरू" ले पृथकतावादी सङ्घर्षको औचित्य साबित गर्ने सामल पाउँछन् ।

संसारभरि पहिचानको राजनीति (Identity politics) को निहुँमा घृणावादी कित्ताकाट भइरहेको बेलामा पृथकतावादी सङ्घर्षहरूलाई "बहु-राष्ट्रियता" ले झन् हौस्याउने हो कि भन्ने आशंकै आशंकाको बादल मडारिइरहेको छ । एउटै देशभित्र अनेक प्रजातीय वा जातीय कबिलाइ संरचनाहरू कायमै रहेका देशमा "बहु-राष्ट्रियता" को आडमा नरसंहारका खुनी शृंखला सुरु हुने खतरा झन् बढेको आँकलन गरिएको छ । उक्त दुरावस्थाको निराकरण गर्ने सैद्धान्तिक आधार "राष्ट्रराज्य", "द्वि-राष्ट्रियता" तथा "बहु-राष्ट्रियता" जस्ता अवधारणामा भेटिँदैन। उपर्युक्त निराकरणको निमित्त राज्यराष्ट्र (State Nation) सिद्धान्त प्रभावकारी हुन सक्छ ।

जसरी पुरानो युरोपेली प्रतिमानमा आधारित "राष्ट्रराज्य"(Nation State) ले तत्कालीन युरोपमा विभिन्न "राष्ट्रियता" हरूलाई पहिचान गर्न, परिभाषा दिन र सीमांकनको आधार बनाउन आधार दिएर सकारात्मक योगदान पुर्‍याएको भएतापनि कालान्तरमा *सङ्कीर्ण-राष्ट्रियतावादी* दृष्टिकोणलाई मलजल गरेर संसारभरि नकारात्मक असर पार्‍यो, त्यसरी नै केही देशमा समस्या समाधानको सूत्रका रूपमा अगाडि सारिएको "बहु-राष्ट्रियता" ले पनि बृहद् विश्व परिवेशमा घृणा-आधारित पहिचानको राजनीति (Identity politics) लाई मलजल गरेर समष्टिमा नकारात्मक असर नै पार्छ । किनभने देशभित्रका विविध एकाइहरूलाई अलग अलग ("राज्य" एकीकृत, तर "राष्ट्र" अनेक) मानिसकेपछि त्यस्तो देशको एकता रणनीतिक, कृत्रिम एवं अविश्वास-आधारित हुन्छ। रणनीतिक, कृत्रिम एवं

अविश्वास-आधारित एकताबाट बनेको देश ("राज्य") ले विविध एकाइहरूका "प्रतिस्पर्धी राष्ट्रियताहरूका सङ्घर्ष" लाई व्यवस्थापन गर्न सक्दैन ।

कुनै पनि देशलाई "बहु-राष्ट्रिय राज्य" (Plurinational State र Multi-Nation State) मान्नुको तात्पर्य उक्त देशमा अस्तित्वमा रहेका विविध प्रजाति, जाति, भाषिक समुदाय, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिको महत्वाकाङ्क्षालाई सांस्कृतिक सामाजिक सामञ्जस्यको मान्यताबाट सम्बोधन नगरी राजनीतिक प्रतिस्पर्धाको लागि ढाँचा खडा गर्नु हो। यस्तो राजनीतिक प्रतिस्पर्धा समावेशी, समन्वयाभिमुखी एवं एकतावादी पनि हुन सक्छ र सङ्कीर्ण अहङ्कारवादी, पार्थक्यवादी, वैभिन्न्यवादी, घृणावादी पनि हुन सक्छ । नेपालमा लिम्बुवान, खम्बुवान, किरात, कोचिला, मधेश, थरुहट, मिथिला, भोजपुरा, अवध, डोटेली, मगरात, तमुवान, खसान (खशान ?), ताम्सालिङ्, जडान, नेवा (नेपा: ?) आदि प्रदेशर प्रान्तर राज्यका नाममा भएको मानसिक कित्ताकाट, साम्प्रदायिक घृणावादको प्रवर्धन र हुन सक्ने अन्त्यहीन सङ्घर्षलाई ख्याल राख्दा त "बहु-राष्ट्रियता" ले नकारात्मक असर पार्ने नै देखिन्छ ।

संसारका विभिन्न भागका साक्ष्यहरूले "बहु-राष्ट्रियता" को चुरोमा रहेको खोटो दृष्टिकोणले स्वभावत: नकारात्मक परिणाम नै निम्त्याउने गरेको देखाउँछन् । जब विखण्डनकारी, पृथकतावादी, घृणा-आधारित अवधारणालाई मान्यता दिइन्छ भने त्यसले निम्त्याउने टुक्रे कित्ताकाटको कुनै सीमा हुँदैन । जब समुद्रमा दुई पिल्लरमाथि निर्मित, एक व्यक्तिको स्वामित्वमा रहेको, सानो कृत्रिम संरचना (रफ्स् टावर) लाई त स्वतन्त्र "राष्ट्र" भनेर दाबी गरेको स्थिति समेत देखिइसकेको छ भने जातीय, क्षेत्रीय, भाषिक आदि आदि विविधता यति धेरै रहेको नेपालको परिप्रेक्ष्यमा "बहु-राष्ट्रियता" (Pluri-nationalism) अवधारणाको जति प्रवर्धन हुन्छ, उति नै पहिचानको राजनीति (Identity politics) भनाउँदो डढेलोलाई पेट्रोल छर्किएजस्तो हुनजान्छ । नेपाल, भारत, सं.रा. अमेरिका जस्ता देशहरूका परिप्रेक्ष्यमा "बहु-राष्ट्रियता" एक असान्दर्भिक र अवांछित अवधारणा हो, किनभने यी देशहरू राज्यराष्ट्र (State Nation) हुन् ।

# ९
# राज्यराष्ट्र

“राज्य” (State) र “राष्ट्र” (Nation) दुईवटा शब्दहरूमध्ये राज्य शब्दलाई अगाडि (विशेषणको स्थानमा) र राष्ट्र शब्दलाई पछाडि (विशेष्यको स्थानमा) राख्दा बन्ने “राज्यराष्ट्र” (State Nation) एक सैद्धान्तिक अभिनिर्माण (Theoretical construct) हो । कुनै पनि सिद्धान्तका चारवटा प्रकार्यहरू समेटी आधुनिक सिद्धान्तका सबै विशेषताहरू पूरा गर्ने हुनाले “राज्यराष्ट्र” एक सिद्धान्त हो भन्ने तथ्य प्रस्तुत पुस्तिकामा यस अगाडि नै पेश गरिसकिएको छ ।

## ९.१. राज्यराष्ट्रको प्रमेय

“राज्यराष्ट्र” मा विशेष्यको स्थानमा “राष्ट्र” शब्द रहेको हुनाले यसको प्रमेय “राष्ट्र” हो र विशेषणको स्थानमा रहेको “राज्य” शब्दले उक्त “राष्ट्र” को गुण, विशेषता, स्वभावलाई जनाउँछ। अर्थात्, “राज्यराष्ट्र” मा मुख्य उपादेय तत्व “राष्ट्र” हो । यहाँ “राष्ट्र” को परिभाषा “राज्य” को दृष्टिबिन्दुबाट निर्धारित हुन्छ । तसर्थ, “राज्यराष्ट्र” मा साध्यको रूपमा “राष्ट्र” र साधनको रूपमा “राज्य” रही समष्टिमा (साधन र साध्यको अभिन्न पारस्परिक सम्बन्धको कारणले) “राज्य नै राष्ट्र” (State as Nation) स्वरूपमा विकास हुन्छ ।

वैदिक, बौद्ध, जैन, किराती, बोन आदि नेपालका मौलिक रैथाने दार्शनिक मान्यताको तात्पर्य बुझ्दा यहाँ "राष्ट्र" नै प्रमेय (मुख्य उपादेय तत्व) रहेको पाइन्छ। "राष्ट्र" को व्यावहारिक सार्थकताचाहिँ "राज्य" बाट नै सुनिश्चित हुने हो भन्ने तथ्यलाई वेद (विशेषत: अथर्ववेद) एवं वैदिक धाराका सान्दर्भिक शास्त्रहरूमा उजागर गरिएको देखिन्छ। उपर्युक्त वैदिक मान्यतालाई बौद्ध, जैन, किराती, बोन आदिले पनि आत्मसात् गरेका छन् ।

कुनै "राज्य" को जन्म एवं विकासमा विभिन्न पारिस्थितिक सम्भाव्यता (Situational probability) को भूमिका रहन्छ । जुन कुनै कारणले जन्मोस्, हरेक "राज्य" ले आफूसँगै एक "राष्ट्रियता"-विशेषलाई अवलम्बन गरेको हुन्छ र उक्त विशिष्ट "राष्ट्रियता" को सुदृढिकरणले नै "राज्य" लाई "राष्ट्र" का रूपमा सार्थकता सुनिश्चित गर्छ। तसर्थ, "राज्य नै राष्ट्र हो" भन्नुको तात्पर्य "राष्ट्र-निर्माण" को प्रक्रियामा साधनत्वेन "राज्य" को निर्णायक भूमिका रहने तथ्यलाई मान्नु हो ।

## ९.२. राज्यराष्ट्रको प्रमाण

"राज्यराष्ट्र" को सिद्धान्तीकरण "राष्ट्र" को वैदिक अवधारणामा मुख्यत: आधारित छ । वैदिक, बौद्ध, जैन, किराती, बोन आदि नेपालका मौलिक रैथाने पद्धतिको भौगोलिक, ऐतिहासिक, दार्शनिक आधारशिला साझा भएको हुनाले "राज्यराष्ट्र" सिद्धान्तलाई उक्त सबैको समन्वयबाट अभिनिर्माण गरिएको छ । वैदिक मान्यता अनुसारको "राष्ट्र" युगानुकूल पद्धतिबाट भू-राजनीतिक-वैधानिकता प्राप्त एउटा निश्चित भौगोलिक सीमाबद्ध "राज्य" हो, जहाँ विविध प्रजाति, जाति, भाषा, संस्कृति, सम्प्रदाय, समुदाय, जात, भौगोलिक क्षेत्र आदिको समन्वयबाट समष्टिकृत "राष्ट्रियता" निर्धारण भएको हुन्छ ।

वैश्विक तहमा "वसुधैव कुटुम्बकम्" को आदर्श लिएका वैदिक ऋषिहरूले मानवलाई प्रजाति, जाति, सम्प्रदाय, समुदाय, जात, भौगोलिक क्षेत्र आदि इत्यादि कुनै पनि आधारमा विभाजन नगरी समष्टिमा "कृण्वन्तो

विश्वमार्यम्" भनेका छन् भने सारा संसार नै एक समष्टिकृत एकाइ भए तापनि अनेक कारणले विश्वमा अनेक राष्ट्रहरू अस्तित्वमा आउने व्यावहारिक यथार्थलाई बुझेका हुनाले वैदिक मन्त्रद्रष्टाहरूले स्वतन्त्र राष्ट्रका विविध आयामबारे चिन्तन पनि गरेका छन्। "राष्ट्र" बन्ने आधार अनेक हुने भएतापनि निर्णायक आधार भने एउटा निश्चित भौगोलिक सीमाबद्ध "राज्य" नै हो भन्ने मान्यता वैदिक वाङ्मयमा पाइन्छ। दिक् (Space) र काल (Time) मध्ये दिक् नै प्राथमिक भएको वैदिक मान्यता हुनाले एउटा निश्चित भौगोलिक सीमाबद्ध "राज्य" लाई नै "राष्ट्रियता" को परिभाषाका निमित्त निर्णायक मान्नु वैदिक दृष्टिकोणमा स्वाभाविक हो।

प्राचीन भारतवर्ष, नेपाल, वर्तमान इण्डिया, सं.रा. अमेरिका आदिको "राष्ट्रियता" को परिभाषा मुख्यत: "राज्य" बाट नै नि:सृत भएको हो। अति प्राचीन नेपालको कुरा नगरी प्राचीन, मध्यकालीन तथा आधुनिक नेपालको परिप्रेक्ष्यमा कुरा गर्ने हो भने पनि नेपालको "राष्ट्रियता" को प्राथमिक तत्त्व "राज्य" नै रहिआएको देखिन्छ। नेपालको केन्द्र बनेर रहेको नेपालमण्डल क्षेत्र तथा यहाँका रैथाने मानिएको नेवार समुदाय त "राज्यराष्ट्र" (State Nation) को जिउँदो-जाग्दो प्रमाण हुँदै हो। यस्तै जीवन्त प्रमाण नेपालको मिथिला क्षेत्र वा अन्य कुनै पनि क्षेत्रमा समेत पाइन्छ। मेची, कोशी, गण्डकी, कर्णाली, महाकाली प्रश्रवण क्षेत्रहरूमा प्राचीन कालदेखि विद्यमान विविधताको समन्वयबाट नेपाली राष्ट्रियताको उद्भव एवं विकास हुनु "राज्यराष्ट्र" (State Nation) सिद्धान्तको व्यावहारिक साक्ष्य हो। इण्डिया तथा सं.रा. अमेरिका जस्ता देशहरू पनि "राज्यराष्ट्र" का अनेक उदाहरण हुन्।

यसरी, "राज्यराष्ट्र" का प्रमेय र प्रमाण दुवैको विद्यमानताले के देखाउँछ भने "राज्यराष्ट्र" अवधारणाको दार्शनिक विमर्श एवं सिद्धान्तीकरणका निमित्त आवश्यक पर्ने पूर्वाधारहरू विद्यमान छन्। तुलनात्मक विमर्शका निमित्त "राज्यराष्ट्र" भन्दा विपरित दृष्टिकोण भएका अवधारणाहरू (राष्ट्रराज्य, द्वि-राष्ट्रियता, बहु-राष्ट्रियता) समेत

रहेका हुनाले उपर्युक्त दार्शनिक विमर्श एवं सिद्धान्तीकरणको दायरा थप बृहत्तर भएको छ ।

### ९.३. राज्यराष्ट्र सिद्धान्त

**'राष्ट्र' को परिभाषा :-**

भू-राजनीतिक-वैधानिकता प्राप्त एउटा निश्चित भौगोलिक सीमाबद्ध "राज्य" नै "राष्ट्र" हो, जुन स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न हुन्छ र जहाँ विविध प्रजाति, जाति, भाषा, संस्कृति, सम्प्रदाय, समुदाय, भौगोलिक क्षेत्र आदिको समन्वयबाट समष्टिकृत "राष्ट्रियता" निर्धारण भएको हुन्छ ।

राज्यराष्ट्र (State Nation) सिद्धान्तको सारलाई निम्नानुसारका चारवटा बुँदाहरूमा प्रस्तुत गरिएको छ :–

- राज्य नै राष्ट्र हो । (State as Nation)
- कुनै पनि देशको भू-राजनीतिक-वैधानिकता र सांस्कृतिक सामाजिक एकत्वको समष्टि नै "राज्यराष्ट्र" हो । (State Nation as the integration of both the Geo-political-legality and the Cultural-Social-unity)
- "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व हो । (State as the decisive factor for defining and identifying Nationality)
- "राज्यराष्ट्र" को सुदृढिकरणका निमित्त नागरिक तथा राजनीतिक अधिकार र सांस्कृतिक अधिकारको प्रत्याभूति विशिष्टिकृत हुनु पर्छ । (Ensuring the Civil and Political Rights and the Cultural Rights as mutually exclusive entities)

उक्त चारवटा बुँदाहरूमा समेटिएका आधारभूत प्रस्थापनाबारे क्रमश: विमर्श गरिएको छ :–

### ९.३.१. राज्य नै राष्ट्र

"राज्यराष्ट्र" सिद्धान्तमा "राज्य" लाई विशेषण वा गुणका रूपमा मानी "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषा एवं प्रचलन हुन्छ। "राज्यराष्ट्र" सिद्धान्त अनुसार, भू-राजनीतिक-वैधानिकता प्राप्त एउटा निश्चित भौगोलिक सीमाबद्ध "राज्य" नै "राष्ट्र" हो, जहाँ विविध प्रजाति, जाति, भाषा, संस्कृति, सम्प्रदाय, समुदाय, भौगोलिक क्षेत्र आदिको समन्वयबाट समष्टिकृत "राष्ट्रियता" निर्धारण भएको हुन्छ ।

यो सिद्धान्तमा स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश ("राज्य") को भू-राजनीतिक-वैधानिक अस्तित्वलाई "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषाका लागि प्राथमिक तत्व मानिएको छ। यो सिद्धान्तमा प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई अनिवार्य "राष्ट्र" मानिँदैन; प्रत्युत उपर्युक्त तत्वहरूमा विविधता रहँदारहँदै पनि साझा राष्ट्रियतामा समन्वित हुनुलाई नै "राष्ट्रियता" मानिन्छ । तसर्थ, कुनै पनि व्यक्ति र नागरिकलाई निजको जन्म, वर्ण, धर्म, रङ्ग आदि, यो वा त्यो कुनै पनि, कारणले भेदभाव नगर्नु "राज्यराष्ट्र" को मौलिक विशेषता (Intrinsic characteristics by virtue of origin) हो । यसरी, "राज्यराष्ट्र" सिद्धान्तले *उदार-राष्ट्रियतावादी* दृष्टिकोण अवलम्बन गरेको छ ।

अर्कोतिर, "राज्यराष्ट्र" सिद्धान्तको विपरित मान्यता राख्ने "राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" अवधारणाहरूमा *सङ्कीर्ण-राष्ट्रियतावादी* दृष्टिकोण अवलम्बित छ । किनभने तिनीहरूमा प्रजाति (Race), जाति (Ethnicity, Tribe, Clan), भाषा (Language), धार्मिक सम्प्रदाय (Religion), सांस्कृतिक पहिचान (Cultural Identity), क्षेत्रीय पहिचान (Regional Identity) आदिलाई "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषाका लागि प्राथमिक तत्व मानिएको हुन्छ। "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषा नै सङ्कीर्ण पार्थक्यवादी, वैभिन्न्यवादी, अहङ्कारवादी, घृणावादी दृष्टिकोणबाट गर्ने हुनाले "राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य", "बहु-राष्ट्रिय

राज्य" अवधारणा अनुसार बनेका देशमा प्रजातीय, जातीय, भाषिक, धार्मिक, सांस्कृतिक, भौगोलिक क्षेत्रगत भेदभाव नै "राष्ट्र" को मौलिक विशेषता (Intrinsic characteristics by virtue of origin) हुन्छ। मानवाधिकारका कैयौँ प्रावधानहरू अन्तर्राष्ट्रिय कानुनबाट प्रत्याभूत भएको तथा राष्ट्रिय कानुनमा समेत मौलिक हकका बलिया प्रावधानहरू व्यवस्था गरिएको वर्तमान युगमा समेत नस्लीय-भेदभाव र रङ्गभेद वा अन्य प्रकारका भेदभाव नहट्नुको कारण संसारमा अझै पनि *सङ्कीर्ण-राष्ट्रियतावाद*को धङधडी कायमै रहनु पनि हो । विविधतालाई स्वागत गरी वर्णसङ्करतालाई समते निकै महत्वपूर्वक स्वीकारिएको सं.रा. अमेरिकामा श्वेत-पुरुष-अहङ्कारवादी (White-Male-Supremacist) हरूले राष्ट्रपति चुनावका दौरानमा बाराक ओबामा तथा हिलारी क्लिन्टनप्रति व्यक्त गरेका घृणाजन्य वचनको मूलमा पनि *सङ्कीर्ण-राष्ट्रियतावादी* सोच नै रहेको छ ।

युरोपेली प्रतिमानको "राष्ट्रराज्य" अवधारणामा "राष्ट्र" र "राज्य" लाई अलग अलग परिघटनाका रूपमा हेरी "राष्ट्रवाद" (Nationalism) र "देशभक्ति" (Patriotism) लाई पनि अलग अलग मानेर परिभाषित गर्ने विसङ्गतिपूर्ण दृष्टिकोण रहेको छ । तर, "राज्यराष्ट्र" सिद्धान्तमा "राष्ट्र" र "राज्य" लाई त्यसरी अलग अलग नमानिने एवं भू-राजनीतिक-वैधानिकता प्राप्त एउटा निश्चित भौगोलिक सीमाबद्ध "राज्य" नै "राष्ट्र" का स्वरूपमा विकास हुने मान्यता रहेको छ । विविध प्रजाति, जाति, भाषा, संस्कृति, सम्प्रदाय, समुदाय, भौगोलिक क्षेत्र आदिको समन्वयबाट समष्टिकृत "राष्ट्रियता" निर्धारण हुने भएकाले उक्त "राज्यराष्ट्र" मा "राष्ट्रवाद" (Nationalism) र "देशभक्ति" (Patriotism) वास्तवमा उही मान्यताका विविध संज्ञा मात्र ठहरिन्छन् । अर्थात्, कतिपय पश्चिमा अध्येताहरू तथा तिनका अनुयायी अन्य व्यक्तिहरूले "राष्ट्रवाद" लाई नकारात्मक, सङ्कीर्ण, विभेदकारी मानेर आलोचना गर्ने तथा त्यसको विकल्पमा "देशभक्ति" ले राष्ट्रिय चरित्र बोक्ने भनी विश्लेषण गर्ने जुन प्रचलन छ, त्यो प्रचलन "राज्यराष्ट्र" को परिप्रेक्ष्यमा पूरै असान्दर्भिक देखिन्छ । "राज्यराष्ट्र" को

दृष्टिबिन्दुबाट हेर्दा “राष्ट्रवाद” (Nationalism) र “देशभक्ति” (Patriotism) समानार्थक संज्ञाहरू हुन् ।

“राज्यराष्ट्र” सिद्धान्तमा राज्यको जन्म एवं विकासमा विभिन्न पारिस्थितिक सम्भाव्यता (Situational probability) को भूमिका रहने मानिएको पूर्वोक्ति (Premise) यहाँनेर उल्लेख्य छ। राज्यको उद्भव तथा विकास कसरी भयो भन्नेबारे विभिन्न सिद्धान्तहरूका आफ्नैखाले मान्यताहरू छन् । कसैले ईश्वरीय इच्छालाई, कसैले मानिसहरूको मत्स्य-न्यायबाट त्राण पाउने आवश्यकतालाई, कसैले सामाजिक सम्झौतालाई तथा अन्यले अरु नै कुनै कारणलाई राज्यको उद्भवको कारक मानेका छन् । राज्यको निर्माणमा भौगोलिक पक्षको निर्णायक प्रभाव रह्यो भन्ने कतिपयको विश्लेषण देखिन्छ भने अन्य कतिपयले प्रजातीय, जातीय, धार्मिक, भाषिक आदि तत्त्वहरूलाई प्रधान मानेर विश्लेषण गरेका छन् । वास्तवमा, राज्यको उद्भव, सीमाङ्कन, विकास आदिमा कुनै निश्चित गणितीय सूत्र जस्तो सामान्यीकृत सूत्र छ भनेर मान्न सकिँदैन, बरु विभिन्न पारिस्थितिक सम्भाव्यता (Situational probability) ले भूमिका निर्वाह गरेको हुन्छ भनेर मान्नु नै बढी तर्कसङ्गत हुन्छ ।

व्यावहारिक हिसाबले के देखिन्छ भने जुन-कुनै कारणले जन्मोस्, हरेक भू-राजनीतिक-वैधानिक देशले आफ्नो अस्तित्वसँगै एकसाथ “राज्य”, “राष्ट्र” एवं “राष्ट्रियता” को विशेषाधिकार प्राप्त गर्छ । जब कुनै कथित देशले एकसाथ “राज्य”, “राष्ट्र” एवं “राष्ट्रियता” को विशेषाधिकार हासिल गर्न सक्दैन, तब स्वतन्त्रता, स्वाधीनता, सार्वभौमसत्ता सुनिश्चित हुँदैन । विश्वमा आजसम्मको व्यावहारिक प्रचलन यही हो र भविष्यमा पनि पारिस्थितिक सम्भाव्यताका कारणले यदि कुनै नयाँ देश जन्म्यो भने त्यसलाई लागू हुने अवस्था पनि यही हो । उपर्युक्त व्यावहारिक यथार्थलाई आत्मसात् गरेर नै “राज्यराष्ट्र” सिद्धान्तमा भू-राजनीतिक-वैधानिकता प्राप्त एउटा निश्चित भौगोलिक सीमाबद्ध “राज्य” लाई नै “राष्ट्र” मानिएको हो, जुन स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न हुन्छ र जहाँ विविध

प्रजाति, जाति, भाषा, संस्कृति, सम्प्रदाय, समुदाय, भौगोलिक क्षेत्र आदिको समन्वयबाट समष्टिकृत "राष्ट्रियता" निर्धारण भएको हुन्छ ।

कुनै देश ("राज्य"/"राष्ट्र") ले भू-राजनीतिक-वैधानिकता कसरी प्राप्त गर्छ र आफ्नो स्वतन्त्रता, स्वाधीनता, सार्वभौमसत्ता सुनिश्चित गर्छ भन्ने विचार गर्दा त्यसको पद्धति विभिन्न युगमा विभिन्न तरहको रहेको देखिन्छ। वर्तमान युगमा विभिन्न वैश्विकरअन्तर्राष्ट्रिय कानुनी संयन्त्रहरू, सन्धिहरू एवं संयुक्त राष्ट्रसङ्घ लगायतका संस्थाहरूको विद्यमानताले भू-राजनीतिक-वैधानिकताको विशिष्टिकरण एवं स्वतन्त्रता, स्वाधीनता, सार्वभौमसत्ताको सुनिश्चितताको पद्धति धेरै नै व्यवस्थित, औपचारिक, समन्वित भएको छ। केही अपवादहरूलाई छाडेर अन्तर्राष्ट्रिय सीमाहरू पनि यथाशक्ति नियमन-सक्य, परस्पर मान्य एवं धेरै हदसम्म स्थिर भइसकेका छन् । त्यस्तै, केही अपवादहरूलाई छाडेर प्रायः देशहरूमा "राष्ट्रियता" को पहिचान, परिभाषा एवं व्याख्या गर्न सहजै सकिने अवस्था छ। यसरी युगानुकूल पद्धतिबाट अस्तित्वमान् देश ("राज्य"र"राष्ट्र") लाई विशेष्यको स्थानमा "राष्ट्र" शब्द र विशेषणको स्थानमा "राज्य" शब्द राखी "राष्ट्र" को परिभाषा "राज्य" को दृष्टिबिन्दुबाट निर्धारण गर्न सकिने अवस्था छ। राज्यराष्ट्र सिद्धान्तको आलोकमा सहजैसँग सबैथरि राष्ट्रियताको विज्ञानसम्मत व्याख्या गर्न सकिन्छ। नेपाल, भारत, सं.रा. अमेरिका जस्ता मौलिक रूपमै विविधतापूर्ण देशहरूका परिप्रेक्ष्यमा मात्र होइन कि, विगतमा *सङ्कीर्ण-राष्ट्रियतावादी* आधारबाट जन्मेका भएतापनि वैश्विकरण (Globalization) प्रक्रिया तथा अन्य कारणहरूले वर्तमानमा विविधतापूर्ण बन्न आइपुगेका युरोपेली तथा गैर-युरोपेली देशहरूका परिप्रेक्ष्यमा समेत राज्य नै राष्ट्र हो भन्ने "राज्यराष्ट्र" सिद्धान्तबाट मात्र "राष्ट्रियता" को अद्यावधिक परिभाषा एवं व्याख्या गर्न सकिन्छ ।

### ९.३.२. भू-राजनीतिक-वैधानिकता र सांस्कृतिक सामाजिक एकत्वको समष्टि

निश्चित भौगोलिक सीमाभित्र बसोबास गर्ने विविध प्रजाति, जाति, समुदायहरूका बीचमा "राज्य" का कारणले सह-अस्तित्व, समन्वय, सहकार्य, सहृदयता मौलाएर देशमा सांस्कृतिक सामाजिक एकत्व स्थापित हुन गई एक समष्टि "राष्ट्र" जीवन्त बन्छ । तसर्थ, "राज्यराष्ट्र" सिद्धान्तमा अन्ततोगत्वा "राज्य" र "राष्ट्र" समान अर्थ दिने संज्ञाहरू बन्न पुग्छन् – जहाँ "राष्ट्र" को आधारशिला एक स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न "राज्य" को भू-राजनीतिक-वैधानिकतामा स्थापित हुन्छ ।

प्रचलनमा के देखिन्छ भने "राज्य" संज्ञामा भू-राजनीतिक-वैधानिकतालाई र "राष्ट्र" संज्ञामा सांस्कृतिक सामाजिक एकत्वलाई जोड दिइएको हुन्छ । ठीक परिप्रेक्ष्यमा प्रयोग गर्ने हो भने उक्त प्रचलनलाई मान्न सकिन्छ । "राज्य" संज्ञामा भू-राजनीतिक-वैधानिकतालाई र "राष्ट्र" संज्ञामा सांस्कृतिक सामाजिक एकत्वलाई जोड दिँदा तिनीहरू अलग अलग तत्त्वहरू भन्ठान्नु हुँदैन । वास्तवमा "राज्यराष्ट्र" मा प्रमेयचाहिँ "राष्ट्र" भएको हुनाले आदर्श स्थितिमा "राष्ट्र" को बृहद् अवधारणा भित्रको आधारशिला वा चुरोका रूपमा "राज्य" रहेको हुन्छ भनिएको हो । तसर्थ, राज्य र राष्ट्र अलग अलग तत्त्वहरू होइनन् ।

प्रसङ्गवश उल्लेख भइसकेको छ कि "राष्ट्रराज्य", "द्वि-राष्ट्रिय राज्य" एवं "बहु-राष्ट्रिय राज्य" अवधारणाहरूमा पुरानो युरोपेली मान्यताले "राष्ट्र" (Nation) र "राज्य" (State) लाई अलग अलग तत्वहरू मान्छ – जसमध्ये "राष्ट्र" लाई पूर्ववर्ती र "राज्य" लाई परवर्ती मानिन्छ । युरोपेली अवधारणाअनुसार, कतिपय अवस्थामा "राष्ट्र" र "राज्य" ले समान संरचनालाई जनाउने तथा अन्य कतिपय अवस्थामा अलग अलग तत्वहरूलाई जनाउने गरी ती संज्ञाको प्रयोग भएको हुन्छ । त्यस्तो पार्थक्यको कारणले गर्दा नै देशमा प्रजातीय, जातीय वा अन्य सङ्कीर्ण पहिचानलाई निहुँ बनाएर "प्रतिस्पर्धी राष्ट्रियताहरूको सङ्घर्ष" सुरु हुन

सक्ने खतरा जहिल्यै रहने हो ।

देशमा सांस्कृतिक सामाजिक एकत्वको सुनिश्चिततताबिना कुनै पनि देश "राज्यराष्ट्र" का रूपमा सार्थक हुन सक्दैन । नेपाल, इण्डिया तथा अन्य जुनसुकै पनि बहु-प्रजातीय, बहु-जातीय, बहु-भाषिक, बहु-सांस्कृतिक, बहु-सम्प्रदाययुक्त देशहरूमा बहुलता र विविधतालाई समन्वित, समष्टिकृत, संश्लेषित गरेर नै "राज्य" बाट "राष्ट्र" को तहसम्म विकास सम्भव हुने हो ।

देशभित्र विद्यमान विविध प्रजाति, जाति, समुदाय, सम्प्रदाय, भाषा, भौगोलिक इलाका आदिलाई राज्यसत्तामा जो आसीन छन्, उनीहरूले समान, समन्यायी, सहृदयतापूर्ण व्यवहार गर्नु अनिवार्य हुन्छ । शासनमा डाडु-पन्यु जसको हातमा छ, समुचित प्रशासनको प्रत्याभूतिको जिम्मा पनि उसैको हो । यदि कसैले पनि शासनबाट अन्याय भएको महसुस गर्‍यो भने स्वाभाविक रूपमा उसको प्रवृत्ति शासनसत्ताविरुद्ध जान्छ, जान्छ । तसर्थ, देशका विविध  प्रजाति, जाति, भाषाभाषी, समुदाय, सम्प्रदाय, विशेष भौगोलिक क्षेत्रका बासिन्दा आदि सबैथरिलाई सांस्कृतिक सामाजिक एकत्वको सूत्रमा जोड्ने प्राथमिक जिम्मेवारी सरकार, संसद, न्यायपालिका जस्ता राज्यसत्ताका प्रमुख अवयवहरूमा जो जो आसीन छन्, उनीहरूकै हो । साथै, सर्वसाधारणले पनि "राज्य" आफ्नै हो भन्ने बोध गरी "राज्य" लाई सुदृढ पार्नुलाई आफ्नो कर्तव्य मान्नु अनिवार्य हुन्छ ।

देशभित्र विद्यमान विविधताको समन्वयबाट साझा "राष्ट्रिय" सामाजिक सांस्कृतिक चेतनाको विकास हुने प्रक्रियालाई सकारात्मक दृष्टिकोणबाट हेरिएन भने "राज्यराष्ट्र" को मर्मलाई बुझ्न सकिँदैन । देशमा विद्यमान विविध प्रजाति, जाति, समुदाय आदिका आ-आफ्ना विशेषताहरू हुन्छन् र ती सबैथरिको एकत्वबाट जीवन्त हुने समुच्चा राष्ट्रको, राष्ट्रिय चरित्रको र संस्कृतिको पनि एउटा विशिष्ट स्वरूप हुन्छ । यसलाई रसायनशास्त्रको उदाहरण लिएर हेर्दा यदि अम्ल र क्षार मिलाउँदा बन्ने छुट्टै प्रकारको वस्तु लवणको गुण अम्ल र क्षार भन्दा छुट्टै खालको

भए तापनि त्यो लवणमा अम्ल र क्षारको बराबरी योगदान छ भन्ने कुरा वैज्ञानिक सत्य हो, त्यसरी नै राष्ट्रिय चरित्र एवं संस्कृतिसँग कुनै जातीय समुदाय, भाषिक समुदाय, भौगोलिक क्षेत्रको चरित्र एवं संस्कृतिको तादात्म्य देख्न नसकिएको अवस्था छ भने पनि त्यस राष्ट्रको राष्ट्रिय चरित्र एवं संस्कृतिमा उक्त जातिको चरित्र एवं संस्कृति सन्निहित हुन्छ । जसरी माथि दिइएको उदाहरणमा अम्ल र क्षारको गुण लवणको गुणसँग तादात्म्य देख्न नसकिए तापनि लवणमा अम्ल र क्षार दुवैको बराबरी योगदान र महत्व छ, त्यसरी नै "राज्यराष्ट्र" मा देशभित्रका विविधताहरू समन्वित, संश्लेषित, सहृदयीकृत हुन्छन् ।

यहीँनेर ख्याल गर्नु पर्ने तथ्य के पनि हो भने देशको साझा "राष्ट्रिय" सामाजिक सांस्कृतिक चेतनामा सो देशमा विद्यमान विविध प्रजाति, जाति, समुदाय आदिका योगदान र महत्व बराबरी भएतापनि "राष्ट्रिय" पहिचानका रूपमा औपचारिक वा अनौपचारिक मान्यता पाएका चाडपर्व, सांस्कृतिक अभ्यास, प्रतीक आदिमा कुनै एक वा केही समुदायको केन्द्रीय भूमिका मुखरित हुने अवस्था रहन सक्छ । यस्तो केन्द्रीय भूमिका ऐतिहासिक कालदेखि नै स्वतः स्थापित भएर आएको खण्डमा सोही अनुसार गर्नु पर्ने हुन्छ भने नयाँ निर्णयहरू गर्ने अवसरमा तत् तत् क्षेत्रका रैथाने समुदायलाई प्राथमिकता दिनु राज्यको कर्तव्य हो । नेपालमण्डलमा हुने सांस्कृतिक आयोजनमा नेवार समुदायको, जनकपुरमा हुने सांस्कृतिक आयोजनमा मैथिल समुदायको, डडेल्धुरामा हुने सांस्कृतिक आयोजनमा डोटेली समुदायको केन्द्रीय भूमिका स्वाभाविक हो । सांस्कृतिक अधिकारका परिप्रेक्ष्यमा रैथाने समुदायको अग्राधिकार भए तापनि नागरिक तथा राजनीतिक अधिकारका परिप्रेक्ष्यमा अग्राधिकार हुँदैन भन्ने "राज्यराष्ट्र" को मान्यता पनि यहीँनेर स्मरणीय छ ।

केही समय पहिलेसम्म पनि नेपालमण्डलमा जीवन्त रहेको अभ्यास एवं पद्धतिको अन्वेषणबाट ज्ञात हुन्छ कि "राज्यराष्ट्र" मा राज्य र सो राज्यको सरहदभित्रका विविध जनसमुदायको अभ्यासबाट स्वाभाविक

परिघटनाको फलस्वरूप साझा सामाजिक सांस्कृतिक चेतनाको अविच्छिन्न विकास भइरहेको हुन्छ । साझा सामाजिक सांस्कृतिक चेतनाको विकास नभएको भए नेपालमण्डलमा अनेकतिरबाट बसाइँ सरेका विविध प्रजाति, जाति, समुदाय आदिको समन्वित स्वरूप बनेर आजको नेवार समुदायको विकास हुने थिएन । नेपालमण्डलमा ब्राह्मण-क्षेत्री-वैश्य-शुद्र चारै वर्णका साथै शिल्पी ("दलित") समुदाय र वर्ण व्यवस्थामा नअट्ने अन्य समुदायहरू मिलेर आधुनिक नेवार समुदाय बनेको हो । राजवंशका हिसाबले गोपाल, महिषपाल, किरात, लिच्छवि, मल्ल ठकुरी तथा शाह ठकुरी वंशसँगसँगै यहाँ आइपुगेका सयौँथरि समुदाय मिसिएर आधुनिक नेवार समुदायको समष्टिकृत स्वरूप बनेको छ । यसरी नेवार समुदाय समन्वित बन्नु नै प्रत्यक्ष प्रमाण हो कि "राज्यराष्ट्र" सिद्धान्तमा मानिएझैं निश्चित भौगोलिक सीमाभित्र बसोबास गर्ने विविध प्रजाति, जाति, समुदायहरूका बीचमा "राज्य" का कारणले सह-अस्तित्व, समन्वय, सहकार्य, सहृदयता मौलाएर देशमा सांस्कृतिक सामाजिक एकत्व स्थापित हुन सम्भव छ ।

साझा सामाजिक सांस्कृतिक चेतनाको अविच्छिन्न विकास हुने जीवन्त अभ्यास नेपालमण्डलको मात्र परिघटना होइन । प्राचीन भारतवर्षीय राज्यहरूमा जताततै सोही रितको जीवन्त अभ्यास रहेको थियो । "राज्य" लाई नै राष्ट्रको चुरो मानी भू-राजनीतिक-वैधानिक सीमाङ्कन गर्ने तथा आफ्ना सरहदभित्रका सबैथरि प्रजाति, जाति, समुदाय आदिलाई उनीहरूका निजात्मक विशेषताको सम्मान गर्दै "राष्ट्रिय" स्तरको साझा सामाजिक सांस्कृतिक चेतनामा आबद्ध हुन प्रेरित गर्ने वैदिक पद्धतिको कारणले नै उपर्युक्त अभ्यास सम्भव भएको हो । यसरी हेर्ने हो भने विविधतायुक्त देश नेपालका विविध प्रजाति, जाति, समुदाय आदिको समन्वयबाट एउटै राष्ट्र निर्मित हुनु स्वाभाविक र सहज कुरा नै हो । तसर्थ, समुच्चा नेपाली राष्ट्रिय संस्कृतिमा ब्राह्मण-क्षेत्री-वैश्य-शुद्रका साथै शिल्पी ("दलित") समुदाय र वर्ण व्यवस्थामा नअट्ने अन्य समुदायहरूको पनि साझा योगदान र महत्व छ भन्ने मान्नु नै समीचीन ठहर्छ ।

"राज्यराष्ट्र" सिद्धान्तले स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न देश ("राज्य") को भू-राजनीतिक-वैधानिक अस्तित्वलाई "राष्ट्र" एवं "राष्ट्रियता" को परिभाषाका लागि प्राथमिक तत्व मानी जुन-कुनै पनि प्रजाति, जाति, जात, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई समष्टिकृत दृष्टिकोणबाट आफूभित्रै समाहित, समन्वित, सुसंयोजित गर्ने हुनाले "राज्यराष्ट्र" मा उक्त पृथक् पृथक् अवयवहरूलाई परस्पर विरोधी, प्रतिस्पर्धी हुँदैनन् र "राष्ट्रियताहरूको सङ्घर्ष" का निमित्त कुनै स्थान हुँदैन । नेपाल र नेपालजस्तै जातीय, भाषिक, साम्प्रदायिक आदि विविधतायुक्त देशका लागि आफ्नो स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न "राज्य" को हैसियतलाई सदैव सुदृढ बनाउने सिद्धान्त "राज्यराष्ट्र" (State Nation) नै हो । राष्ट्रियताको विज्ञानसम्मत व्याख्या गर्न सकिने राज्यराष्ट्र सिद्धान्त विकास भइसकेको अवस्थामा अब *सङ्कीर्ण-राष्ट्रियतावादी सिद्धान्त* अन्तर्गतका तीनवटा अवधारणाहरू (राष्ट्रराज्य, द्वि-राष्ट्रियता, बहु-राष्ट्रियता) त्यागन् आवश्यक देखिन्छ ।

### ९.३.३. 'राष्ट्रियता' को पहिचान एवं परिभाषाको निमित्त 'राज्य' नै निर्णायक तत्त्व

"राज्यराष्ट्र" सिद्धान्तमा "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व हो । "राज्य" लाई "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त निर्णायक तत्त्व मानिनुको तात्पर्य के हो भने प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिका आधारमा "राष्ट्र" को परिभाषा गर्नु हुँदैन र जुन राज्यको नागरिक होइन्छ, सोही राज्यको नागरिकतासँगै राष्ट्रियता पनि निर्धारण हुन्छ । "राष्ट्रियता" बारे निर्णय गर्ने उपर्युक्त पद्धति नेपालका मौलिक रैथाने वैदिक, बौद्ध, जैन, किराती, बोन परम्परामा उहिल्यैदेखि प्रचलनमा छँदैछ र संसारमा आधुनिक राज्यहरूले पनि व्यवहारत: लागू गरिरहेकै छन्, जसको प्रत्यक्ष प्रमाण राष्ट्रियताको पहिचान नागरिकता(Citizenship)

को प्रमाणपत्रबाट हुनु हो ।

माथि विभिन्न उपशीर्षकहरू अन्तर्गत भएका परिचर्चाबाट स्पष्ट भएकै छ कि जुन बेला युरोपमा "राष्ट्रियता" को परिभाषा हुँदै थियो, "राष्ट्र" हरूको पहिचान गरिँदै थियो एवं "राज्य" को वैधानिकता स्थापित गरिँदै थियो, उनीहरूसँग नेपाल, इण्डिया आदिमा जस्तो विविधतापूर्ण परिस्थिति थिएन । युरोपेलीहरूले आफ्नो विशेष परिस्थितिलाई मिल्ने गरी "राष्ट्रराज्य" (Nation State) अवधारणालाई माने, जहाँ प्रजाति, जाति, भाषा, धार्मिक सम्प्रदाय, सांस्कृतिक पहिचान, क्षेत्रीय पहिचान आदिलाई "राष्ट्र" निर्माणको आधार मानियो । सकेसम्म त्यसरी बन्ने "राष्ट्र" को नै स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्तासम्पन्न "राज्य" को रूपमा भू-राजनीतिक-वैधानिक हैसियत हुनु वाञ्छनीय मानिएकाले युरोपेली देशहरूको वैधानिकता सोही अनुसार बन्यो । तर, त्यसरी बनेका युरोपेली देशहरूले समेत अन्य देशबाट बसाइँसराइ गरेका व्यक्तिहरूलाई नागरिकका हैसियतमा समाहित गर्दै जाँदा हिजोको "राष्ट्रराज्य" मान्यता त्यहीँ समेत गतार्थ (Outdated), असान्दर्भिक, अस्वीकार्य बनिसकेको छ । यसरी, वर्तमान युगमा नागरिकताको प्रमाणपत्र नै राष्ट्रियताको प्रमाणपत्र समेत बनेको छ ।

व्यक्ति र "राष्ट्रियता" को अन्तर्सम्बन्धको परिप्रेक्ष्यमा समयको चक्र घुमेर प्राचीन युगसँग तुलनीय अवस्था आएको वा आउन लागेको भनियो भने अत्युक्ति हुँदैन । प्राचीन युगमा (जस्तै : शतपथ ब्राह्मणको साक्ष्य लिन सकिन्छ) जो-कोही व्यक्ति जुन-कुनै बेला सुविधा अनुसार बसाइँसराइ गर्थ्यो र उसको स्थायी बसोबास जुन राज्यका सरहदभित्र हुने हो, त्यही राज्यको राष्ट्रियतामा ऊ समाहित हुन्थ्यो । प्राचीन भारतवर्षीय परम्परामा विशेष परिस्थितिमा बाहेक व्यक्तिको जात, गोत्र, प्रवर आदि अपरिवर्तनीय भए तापनि राष्ट्रियता त्यस्तो अपरिवर्तनीय पहिचानका रूपमा रहेको थिएन । आजको युगमा पनि व्यक्तिको नागरिकता एवं राष्ट्रियता परिवर्तनीय हो । तथापि, व्यक्तिको मूल के हो भन्ने पहिचानलाई नभुल्ने प्रचलन बढेको छ । अमेरिकी नागरिक भई अमेरिकी राष्ट्रियता

स्वीकारेकाहरूलाई अफ्रिकन अमेरिकन, चाइनिज अमेरिकन, इण्डियन अमेरिकन, नेपाली अमेरिकन आदि भनेर पहिचान गरिनु उहिलेको युगमा व्यक्तिको जात, गोत्र, प्रवर आदि अपरिवर्तनीय मानेजस्तै हो । प्राचीन युगसँग तुलना गर्दा फरक के हो भने अहिले नागरिकताको प्रमाणपत्र, राहदानी, प्रवेशाज्ञा आदिको औपचारिक कानुनी एवं व्यावहारिक संरचनाहरू छन् र कानुनी प्रक्रिया पूरा गरेर मात्र नागरिकता सम्बद्ध वैधानिकता पूरा हुन्छ ।

"राष्ट्रियता" को अद्यावधिक व्याख्या गर्ने क्रममा के पनि भुल्न मिल्दैन भने प्राचीन युग र आधुनिक युगको भन्दा अलग्गै व्यवहार चलेको युगको समयावधि पनि शताब्दीयौँ लामो रह्यो, जहाँ प्रजाति, जाति, समुदाय, कबिला आदिका आधारमा कित्ताकाट गरी "राष्ट्रियता" को साँघुरो परिभाषा गरिएको थियो । "राष्ट्र", "राष्ट्रराज्य", "राष्ट्रियता" को युरोपेली प्रतिमान बनेको पनि सोही प्रकारको साँघुरो पृष्ठभूमिमै हो । सारा पृथ्वीका बासिन्दालाई कुटुम्ब मान्ने वैदिक मान्यताका उत्तराधिकारी भए तापनि कौटिल्य (चाणक्य) का बेलाको विशेष परिस्थितिले गर्दा विदेशी नागरिक त के, विदेशीसँग बिहे गरेका आफ्नै देशका नागरिकलाई समेत राज्यका मुख्य मुख्य जिम्मेवारी दिन नहुने व्यावहारिक निर्देशन अगाडि आएको तथ्य पनि यहाँनेर उल्लेख्य छ ।

तर अहिले वैश्विक आबद्धताको कारणले परिस्थिति बदलिएर प्राचीन युगजस्तै उदार व्यवहार गर्न सकिने सम्भावनाको ढोका खुलेको वा खुल्दै गरेको देखिन्छ । यस क्रममा प्रजाति, जाति, समुदाय, कबिला आदिका आधारमा "राष्ट्र" एवं "राष्ट्रियता" को पहिचान र परिभाषा गर्न नमिल्ने भइसकेको हुनाले एक व्यावहारिक एवं ठोस मापदण्डका रूपमा नागरिकता (Citizenship) को भूमिका कुनै पनि देशको राष्ट्रियताको सवालमा सबैभन्दा अहम् बन्न पुगेको छ ।

बसाइँसराइ मानव सभ्यताको एक स्वाभाविक परिघटना हो । राज्यहरूले बसाइँसराइ नियन्त्रण गर्ने खालका प्रावधानहरू (सीमा,

नागरिकता, राहदानी, प्रवेशाज्ञा) लागू गरेको आधुनिक युगमा त बसाइँसराइ भइरहेकै छ भने प्राचीन युगमा जब सारा संसार नै साझा घर हो भन्ने मानिएको यसको मात्रा कति धेरै हुँदो हो, स्वतः आँकलन गर्न सकिन्छ। नसमुदायको सानो हिस्सा निकै लामो समयसम्म कुनै स्थान विशेषमा रैथाने बनेर बस्ने भएतापनि ठूलो हिस्साचाहिँ चलायमान नै रहने गरेको देखिन्छ । भविष्यमा पनि बसाइँसराइ चलिरहनेछ । तसर्थ, आधुनिक राज्यहरूले आफ्नो हितको दृष्टिबिन्दुबाट बसाइँसराइको परिघटनालाई बुझ्ने, विश्लेषण गर्ने एवं राष्ट्रिय हितका निमित्त बढी भन्दा बढी अनुकूलता हुने गरी कार्य गर्न गराउन नीति बनाउनु नै बुद्धिमानी हुनेछ। बसाइँसराइ र आप्रवासन का कारणले देशका जनसमुदायको संरचनामा आउने परिवर्तनको यथार्थलाई सम्बोधन गर्न राष्ट्रियताको अद्यावधिक व्याख्या गर्दै जाने, मौलिक रैथाने संस्कृतिलाई केन्द्रमा राखेर नवागन्तुक नागरिकका संस्कृतिलाई राष्ट्रिय संस्कृतिमा समाहित गर्न प्रत्येक राज्य जहिल्यै तत्पर रहनु पर्छ।

"राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व हुने सैद्धान्तिक मान्यता जति सहज छ, नागरिकताको प्रमाणपत्र नै राष्ट्रियताको प्रमाणपत्रका रूपमा लिइने व्यावहारिक प्रचलन त्यति सहज देखिँदैन । यद्यपि नागरिकताको वैदिक, बौद्ध, जैन आदि दृष्टिकोणबाट विमर्श गरी प्राचीन भारतवर्षको प्रचलनलाई आधुनिक सन्दर्भमा अनुकूलन गरी व्यवहारमा ल्याउन सक्ने हो भने अहिले संसारभरि नागरिकताको प्रावधानको कारणले आएको जटिलताको उपयुक्त समाधान हुन्छ । नत्र, युरोपेली मापदण्ड अनुसार नै नागरिकतालाई बुझ्ने एवं व्यवहार गर्ने हो भने संसारभरि नै नवनागरिक वा अङ्गीकृत नागरिकको सवाल झन् झन् जल्दोबल्दो हुँदै जाने स्पष्टै छ । नागरिकता सम्बद्ध संवैधानिक एवं कानुनी प्रावधानबारे नेपालमा दशकौँदेखि हुँदै आइरहेका विवाद, कोलाहल, आन्दोलन एउटा प्रत्यक्ष उदाहरण हो । फ्रान्स, सं.रा. अमेरिका आदि देशहरूमा आप्रवासी तथा नवनागरिकको राक्षसीकरण वा तुष्टीकरण पनि सान्दर्भिक उदाहरण हुन् ।

बसाइँसराइलाई कदापि रोक्न नसकिने हुनाले त्यसलाई व्यवस्थापन गर्ने पूर्व-सक्रियता हुनु नै बुद्धिमानी ठहर्छ । तसर्थ, बसाइँसराइ र सो सम्बद्ध परिघटनालाई कसरी नेपालको राष्ट्रिय हितका निमित्त बढी भन्दा बढी अनुकूल बनाउन वा व्यवस्थापन गर्न सकिन्छ भन्ने प्रयत्न अवश्यै गर्नुपर्छ । नेपालीहरू संसारका विभिन्न देशहरूमा पुग्नु र मिल्दासम्म सम्पन्न देशको स्थायी बसोबास अनुमति वा नागरिकता समेत लिनु एवं अन्यत्रका व्यक्तिहरू नेपालमा आएर स्थायी बसोबास गर्नु र नेपालकै नागरिकता लिन खोज्नुलाई हामीले स्वाभाविक रूपले लिनु पर्ने हुन्छ। यही कुरा संसारका अन्य देशहरूका सन्दर्भमा पनि लागू हुन्छ ।

विश्वमा केही देशहरूलाई अपवाद छोडेर प्रायः सबै देशहरूमा विविधता बढ्दो क्रममा छ । वंशज एवं जन्मसिद्ध नागरिकतालाई त्यागेर अङ्गीकृत वा अन्य कुनै प्रकारको नयाँ नागरिकता लिने प्रवृत्ति बढ्दै जाँदा विविधताको उत्तरोत्तर वृद्धि नै हुने देखिन्छ। "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व भएको (कानुनी रूपमा नागरिकताको प्रमाणपत्र नै राष्ट्रियताको प्रमाणपत्र बनेको) हुनाले नागरिकताको प्रावधान कस्तो हुने भन्ने सवाल धेरै महत्वपूर्ण, संवेदनशील र कतिपय स्थानमा त जटिल समेत बन्न पुग्छ। नेपालको सन्दर्भमा बसाइँसराइ एवं नागरिकताको सवाल झनै संवेदनशील एवं बढी जटिल छ किनभने नेपालले संसारका सबैभन्दा धेरै जनसंख्या भएका देशहरूको बीचमा रहेको सानो भौगोलिक सरहदलाई मात्र चर्चेको छ, जहाँ छिमेकी देशहरूका एक एक प्रतिशत मात्र मानिसहरूको बसाइँसराइ भयो भने रैथाने नेपालीहरू अल्पमतमा पर्नेछन्। अन्यत्र पनि विविधतासँगै मानिसहरूबीचमा कित्ताकाट, अविश्वास, घृणा बढेको वा बढ्न सक्ने देखिएको छ। उपरोक्त कित्ताकाट, अविश्वास, घृणाको वृद्धिमा एकातिर युरोपेली प्रतिमानको "राष्ट्रराज्य" को अवधारणागत धङ्धडीका कारणले *सङ्कीर्ण-राष्ट्रियतावादी* सोचको भूमिका अवश्यै छ, तर जल, जमीन, जङ्गल आदि प्राकृतिक संसाधनको सीमितताका कारणले पनि बसाइँसराइ आप्रवासन असीमित परिमाणमा हुन नसक्ने, हुन नहुने व्यावहारिक पाटो पनि भुल्न मिल्दैन ।

समाधान कसरी गर्ने त ?

उपर्युक्त समाधानको निमित्त “राज्यराष्ट्र” सिद्धान्तमा रहेका मान्यताहरूलाई निम्नानुसार बुँदागत रूपमा प्रस्तुत गरिएको छ :

(१) नागरिकताको वर्गीकरण वंशज, जन्मसिद्ध, अङ्गीकृत वा अन्य जुन-कुनै संज्ञाको प्रयोग गरी गरिए तापनि कुनै पनि व्यक्तिलाई नागरिकताको प्रमाणपत्र दिई नागरिकका रूपमा स्वीकार गर्नुअघि निजको पात्रता परीक्षणको वस्तुगत (Objective), क्रमागत (Systematic), परीक्षणीय (Verifiable), भरपर्दो (Reliable) विधिको कानुनमै व्यवस्था हुनु पर्छ ।

(२) कोही व्यक्तिलाई नवनागरिकका रूपमा अङ्गीकार गर्नु भन्दा पहिले (अङ्गीकृत वा अन्य कुनै प्रकारको नागरिकता दिनु अगाडि) नै उनीहरू देशभित्र जुन क्षेत्रमा बसोबास गर्ने हो, सो क्षेत्रको रैथाने संस्कृतिमा अनुकूलन भएको हुनु पर्ने प्रावधान राख्नु “राज्यराष्ट्र” सिद्धान्तको अनुकूल व्यवहार ठहर्छ । धर्म, संस्कृति, भाषा आदिका मापदण्डमा योग्य ठहरिने व्यक्तिलाई मात्र नागरिकका हैसियतमा अङ्गीकार गर्नु उपयुक्त देखिन्छ ।

जस्तै : कोही व्यक्तिलाई अङ्गीकृत नागरिकता दिने कि नदिने भन्ने निर्णय गर्दा उक्त व्यक्ति पराइ स्रोतको(Exogenous) एवं आक्रमणकारी प्रवृत्तिको सम्प्रदायको अनुयायी हो कि होइन भन्ने तथ्यलाई पनि विशेष ख्याल पुर्‍याउनु उपयुक्त हुन्छ । वैदिक हिन्दू, बौद्ध, जैन, किराती, बोन, शिख जस्ता धार्मिक परम्परामा आक्रमणकारी प्रवृत्ति नभएको हुनाले संसारका जुनसुकै देशमा पनि उनीहरूलाई नागरिकका रूपमा स्वागत गर्दा कुनै नकारात्मक असर पर्दैन । तर इस्लाम (Islam), इसाइ (Christianity) आदिको प्रवृत्ति आक्रमणकारी भएको हुनाले सकारात्मक असर नपर्ने सम्भावना नै ज्यादा हुन्छ । भविष्यमा आइपर्न सक्ने समस्यालाई पहिल्यै बुझेर “राज्यराष्ट्र” को चरित्र अनुकूल हुने गरी नागरिकताका प्रावधान बनाउनु नै बुद्धिमानी हुन्छ ।

(३) वंशज, जन्मसिद्ध, अङ्गीकृत वा अन्य जुन-कुनै तरिकाबाट नागरिक बनेको भए तापनि निजको क्रियाकलापको आधारमा देशद्रोह गरेको ठहरिएमा कठोरतम दण्डको प्रावधान हुनु पर्छ । "राज्यराष्ट्र" मा भू-राजनीतिक-वैधानिकता प्राप्त एउटा निश्चित भौगोलिक सीमाबद्ध "राज्य" नै "राष्ट्र" का स्वरूपमा विकास हुने मान्यता रहेको हुनाले देशका सबै नागरिकको सर्वोच्च एवं साझा अभिभावकका रूपमा "राज्य" को वैधानिकता, व्यावहारिक आधिकारिकता, सम्मान एवं नागरिक तथा राजनीतिक अधिकारका क्षेत्रमा निर्णायक भूमिका अनिवार्य हुन्छ। सबै नागरिकको संरक्षण गर्नु, राज्य-सत्तामा सहभागिता सुनिश्चित गर्नु, विविधताहरूलाई साझा "राष्ट्रियता" मा समन्वय गर्नु आदि जस्ता कार्यहरू "राज्य" का दायित्व हुन् भने आफ्नो स्वतन्त्रता, स्वाधीनता, सार्वभौमसत्ता, क्षेत्रीय अखण्डता, नागरिकहरूमा सहृदयताको सम्बन्धको प्रवर्धन, "राज्यद्रोही" ("राष्ट्रद्रोही") लाई कठोरतम् सजायको प्रावधान आदिचाहिँ "राज्य" का विशेषाधिकार हुन् भन्ने मान्यता "राज्यराष्ट्र" सिद्धान्तमा निहित छ ।

(४) नागरिकता दिनु अगाडि पात्रता परीक्षणमा कठोर प्रावधान एवं वंशज, जन्मसिद्ध, अङ्गीकृत वा अन्य जुन-कुनै तरिकाबाट नागरिक बनेको भए तापनि निजको क्रियाकलापको आधारमा देशद्रोह गरेको ठहरिएमा कठोरतम दण्डको प्रावधान भइसकेपछि उक्त नागरिक (व्यक्ति) लाई राज्यले सामान्यतया सबै नागरिकहरूलाई जस्तै समान व्यवहार गर्ने पद्धति "राज्यराष्ट्र" सिद्धान्तको अनुकूल हो ।

वंशज नागरिक जति सबैजना राम्रै राम्रा, असलै असल, इमान्दारै इमान्दार र अङ्गीकृत नागरिक जति नराम्रै नराम्रा, खराबै खराब, बेइमान नै बेइमान भन्ठान्ने सोच खोटपूर्ण हो किनभने राम्रो वा नराम्रो, असल वा खराब, इमान्दार वा बेइमान हुने विशेषता नितान्त वैयक्तिक हो । वंशज नागरिकहरूमध्ये पनि कोही राम्रा र कोही नराम्रा, कोही असल र कोही खराब, कोही इमान्दार र बेइमान हुन सक्छन् भने अङ्गीकृत नागरिकहरूमध्ये

पनि कोही राम्रा र कोही नराम्रा, कोही असल र कोही खराब, कोही इमान्दार र कोही बेइमान हुन सक्छन् । अपराध गर्ने जो कोहीलाई कानुनी दण्ड दिनु राज्यको जिम्मेवारी हो ।

तर, देशको विशिष्ट परिवेश अनुसार रैथाने समुदायका व्यक्तिहरूलाई सकारात्मक विभेद गर्नु स्वाभाविकै हो ।

(५) जन्मका हिसाबले रैथाने समुदायका भएतापनि धर्मान्तरण र धर्मपरिवर्तन गरी पराइ स्रोतका (Exogenous) एवं आक्रमणकारी प्रवृत्तिका सम्प्रदायलाई अवलम्बन गर्ने व्यक्तिहरूलाई रैथाने समुदायका व्यक्तिले पाउने कुनै पनि विशेषाधिकार, अग्राधिकार, सकारात्मक विभेदको लाभ नदिने । त्यस्ता धर्मान्तरणकारी र धर्मपरिवर्तनकारी व्यक्तिहरूबाट प्रत्यक्ष वा परोक्ष तवरले राष्ट्रघात हुने सम्भावना स्वाभाविक रूपमा बढी हुने भएकाले पराइ स्रोतका एवं आक्रमणकारी प्रवृत्तिका मिसनरी पद्धतिबाट हुने धर्मान्तरण र धर्मपरिवर्तनलाई कानुनी तवरले दण्डनीय बनाई निराकरण गर्ने ।

(६) आफ्ना नागरिक संसारका जुन-कुनै स्थानमा रहेका भएतापनि तिनीहरूको संरक्षणको दायित्व देशले ग्रहण गरिरहनु पनि “राज्यराष्ट्र” सिद्धान्तको एक प्रमुख विशेषता हो । परदेशमा आफ्ना नागरिकहरूमाथि विभेद, थिचोमिचो, अन्याय नहोस् भनी हरेक देशले प्रभावकारी संरक्षणात्मक भूमिका निर्वाह गर्नु पर्छ ।

साथै, प्रविधिको प्रगतिका कारणले अबको युगमा विदेशमा रहेका नागरिकको मत लिन समेत सम्भव भएको हुनाले निर्वाचनमा संसारमा जहाँकहिँ पनि रहे आफ्ना नागरिकको मतदानलाई सुनिश्चित गर्नु पनि देशको कर्तव्य मानिनु “राज्यराष्ट्र” सिद्धान्त अनुसारकै कार्य हो ।

तर, “राज्यराष्ट्र” यो सिद्धान्तलाई अवलम्बन गर्ने देशले द्वैध नागरिकता (Dual citizenship) वा बहु-नागरिकता (Multiple citizenship) लाई कदापि मान्यता दिन मिल्दैन । यो “राज्यराष्ट्र” को प्रबलतम विशेषताहरूमध्ये एउटा हो ।

अर्थात्, पहिले आफ्नो “मूल-देश”(Nation of origin) कै नागरिक रहेका व्यक्तिहरू कुनै कारणले अन्य देशको नागरिक बनिसकेका छन् भने तिनीहरूको नागरिक तथा राजनीतिक अधिकार (Civil and Political Rights) वर्तमानमा नागरिकता लिएको देशकै परिप्रेक्ष्यमा उपभोग हुने हो । सांस्कृतिक अधिकार (Cultural Rights) को परिप्रेक्ष्यमाचाहिँ “मूल-देश” को यथासम्भव भूमिका रहन्छ ।

तसर्थ, मूल (Origin) का हिसाबले सम्बद्ध भएतापनि आफ्नो “मूल-देश” को नागरिकता त्यागी आफैँले अन्य देशको नागरिकता लिएका वा आफ्ना पुर्खाले ऐतिहासिक कालमा “मूल-देश” को नागरिकता त्यागेको कारणले हाल “मूल-देश” को नागरिक नभई अन्य देशका नागरिकको हैसियत भएका व्यक्तिहरूलाई सांस्कृतिक अधिकारका क्षेत्रमा अपनत्वको व्यवहार गर्दै नागरिक तथा राजनीतिक अधिकारका क्षेत्रमाचाहिँ नागरिकहरूको मात्र मतलाई मान्यता दिनु “राज्यराष्ट्र” को विशेषता ठहरिन्छ ।

“मूल-देश” बाट बसाइँसराइ गरी अन्य देशमा पुगेको व्यक्तिले मूल-देश को नागरिकता त्यागी तत्काल बसोबास गरिरहेको देशको नागरिकता लिएकोमा कालान्तरमा निजले वा निजका सन्तति र वंशजले पुनः मूल-देशकै नागरिकता लिन चाहेको खण्डमा पात्रता परीक्षण प्रक्रियाबाट योग्यता ठहर्याई नागरिकका रूपमा अंगीकार गर्नु “राज्यराष्ट्र” को चरित्रसँग अनुकूल नै हुने देखिन्छ। तर, धर्मान्तरण र धर्मपरिवर्तन गरी पराइ स्रोतका (Exogenous) एवं आक्रमणकारी प्रवृत्तिका सम्प्रदायलाई अवलम्बन गर्ने व्यक्तिलाई भने यस्तो सुविधा कदापि दिनु हुँदैन ।

बसोबासको सुविधाजस्ता कारणले अन्य देशको नागरिकता लिएका व्यक्तिले वा निजका सन्तति र वंशजले कालान्तरमा “मूल-देश” कै नागरिकता लिन चाहेको खण्डमा पात्रता परीक्षण प्रक्रियाबाट योग्यता ठहर्याई नागरिकका रूपमा अंगीकार गर्नु “राज्यराष्ट्र” को चरित्रसँग

अनुकूल भएतापनि व्यवहारत: त्यस्तो प्रावधानको कार्यान्वयनको पाटोचाहिँ परिस्थितिजन्य अनेक पक्षहरूलाई ख्याल राखी निर्णय गर्नु पर्ने हुन्छ ।

(७) कुनै देशका नागरिकले भाडाका सिपाहीका हैसियतमा अन्य देशका सैन्य संरचनामा भर्ती हुने एवं आफ्नो देशभन्दा बाहेक अन्य देशका सैन्य संरचनामा कार्य गर्ने जस्ता विसङ्गतिपूर्ण व्यवहार "राज्यराष्ट्र" सिद्धान्तको प्रतिकूल हो । आफ्ना देशका नागरिकलाई अन्य देशका सिपाही बन्न पठाउनु वा जान स्वीकृति दिनु कुनै पनि स्वतन्त्र, स्वाधीन, सार्वभौमसत्ता-सम्पन्न देशलाई सुहाउने कार्य होइन, अर्कोतिर अन्य देशका नागरिकलाई समेत भाडाका सिपाहीका हैसियतमा भर्ती गर्न सक्ने देशका निमित्त सोही कार्य गौरवबोधक देखिन्छ । संयुक्त राष्ट्रसङ्घ जस्तो साझा संस्थाका नेतृत्वमा संसारका कुनै देशमा शान्ति स्थापनार्थ सेना परिचालन गर्नुचाहिँ देशका निमित्त अवश्यै गौरवको कार्य हो ।

जस्तै : नेपाली नागरिकहरूलाई बेलायत र इण्डियाले "गोर्खाभर्ती" मार्फत् (र अचेल अन्य केही देशहरूले पनि चोरबाटोबाट) तिनीहरूका सैन्यबलमा भर्ती गर्ने जुन प्रचलन छ, त्यो नेपालले तत्काल हटाउनु नै "राज्यराष्ट्र" सिद्धान्तको अनुकूल ठहर्छ। अर्कोतिर, संयुक्त राष्ट्रसङ्घीय मिशनका निमित्त नेपाली सेनाको परिचालनमा सकेसम्म धेरै सक्रियता उपयुक्त देखिन्छ ।

(८) राष्ट्रिय, प्रादेशिक, स्थानीय सांस्कृतिक व्यवहारमा राज्यले रैथाने समुदायको संस्कृतिलाई प्राथमिकता दिनु "राज्यराष्ट्र" को अपरिहार्य विशेषता हो । यो विशेषता "राज्यराष्ट्र" सिद्धान्तमा स्वीकारिएको "राष्ट्र" को परिभाषामै निहित छ । देशमा सांस्कृतिक सामाजिक एकत्वको सुनिश्चितताले नै कुनै पनि देश "राष्ट्र" का स्वरूपमा विकास हुने हुनाले आफ्ना सरहदभित्रका मौलिक रैथाने संस्कृतिलाई सहृदयताको सूत्रमा आबद्ध गराउनु "राज्यराष्ट्र" को दायित्व हो ।

(९) "राष्ट्रियता" को परिभाषा एवं पहिचानका निमित्त "राज्य" नै निर्णायक तत्त्व मानिएको कारणले "राज्यराष्ट्र" मा प्राकृतिक संसाधनमा मूलत: राज्यको स्वामित्व मानिनु स्वाभाविक हो । अर्कोतिर, शिक्षा, स्वास्थ्य, सार्वजनिक यातायात, रोजगारी आदिको प्रत्याभूति वा (कम्तीमा पनि) व्यवस्थापनको प्राथमिक दायित्व पनि राज्यकै हुन जान्छ। "राज्यराष्ट्र" मा निश्चित भौगोलिक सीमाभित्र बसोबास गर्ने विविध प्रजाति, जाति, समुदायहरूका बीचमा "राज्य" का कारणले सह-अस्तित्व, समन्वय, सहकार्य, सहृदयता मौलाएर देशमा सांस्कृतिक सामाजिक एकत्व स्थापित हुन गई एक समष्टि "राष्ट्र" जीवन्त बन्ने मान्यता रहेको हुनाले राज्यलाई साझा अभिभावक मान्नु एवं राज्यद्वारा आधिकारिक रूपमा स्वीकारिएको साझा "राष्ट्रियता" को आदर्शलाई अवलम्बन गर्नु प्रत्येक नागरिकको कर्तव्य मानिन्छ ।

राज्यसत्तामा देशका सबै नागरिकको सहभागिता गराउने, तर प्रजातीय, जातीय, भाषिक, साम्प्रदायिक आदि निहुँमा घृणावादी कित्ताकाट हुन नदिने एवं सांस्कृतिक सामाजिक एकत्वको सुनिश्चित गर्ने हो भने नागरिक तथा राजनीतिक अधिकार (Civil and Political Rights) र सांस्कृतिक अधिकार (Cultural Rights) को पृथक्करण आवश्यक हुन्छ ।

### ९.३.४. नागरिक तथा राजनीतिक अधिकार र सांस्कृतिक अधिकारको विशिष्टिकृत प्रत्याभूति

नागरिक तथा राजनीतिक अधिकार (Civil and Political Rights) र सांस्कृतिक अधिकार (Cultural Rights) लाई घालमेल नगर्नु र तिनीहरूका विशिष्टिकृत दायरा छुट्ट्याएर विशिष्टिकृत(mutually exclusive entities) रूपमा प्रत्याभूति गर्नु "राज्यराष्ट्र" सिद्धान्तको प्रमुख विशेषता हो । उपरोक्त दुई प्रकारका अधिकारहरूलाई घालमेल गर्दा देशमा *सङ्कीर्ण-राष्ट्रियतावादी* सोच व्याप्त भई कथित पहिचानको राजनीति (Identity Politics) मौलाउने हुन जान्छ र कथित पहिचानको राजनीतिले

"राष्ट्रराज्य", "द्वि-राष्ट्रियता", "बहु-राष्ट्रियता" अवधारणाहरू प्रवर्धन गर्ने हुनाले साझा "राष्ट्रियता" को आदर्शमाथि आघात पुग्छ। तसर्थ, "राष्ट्रियता" लाई समूल स्थापित गर्न "राज्यराष्ट्र" मा नागरिक तथा राजनीतिक अधिकार र सांस्कृतिक अधिकारको पृथक्करण (Separation of Civil and Political Rights & Cultural Rights) आवश्यक पर्छ ।

"राज्यराष्ट्र" मा नागरिक तथा राजनीतिक अधिकार र सांस्कृतिक अधिकारलाई तिनीहरूका विशिष्ट परिप्रेक्ष्यमा विशिष्टतापूर्वक प्रत्याभूत गरिन्छ । प्रजातीय, जातीय, साम्प्रदायिक, सामुदायिक, क्षेत्रीय आदि पहिचानहरू सांस्कृतिक अधिकारका विषय-वस्तु हुन् भने नागरिकता एवं राष्ट्रियताका विषयलाई नागरिक तथा राजनीतिक अधिकारका विषय-वस्तु हुन् । अर्थात्, *नागरिक तथा राजनीतिक अधिकार*का निमित्त व्यक्ति नै आधारभूत एकाइ हो र *सांस्कृतिक अधिकार*का निमित्त देशका प्रजातीय, जातीय, साम्प्रदायिक, सामुदायिक, क्षेत्रीय आदि पहिचानहरूका आधारमा बनेका अवयवहरूलाई एकाइ मानिन्छ । तसर्थ, *नागरिक तथा राजनीतिक अधिकार*का परिप्रेक्ष्यमा प्रजाति, जाति, सम्प्रदाय, समुदाय, भौगोलिकक्षेत्र आदिबाट अभिनिर्मित पहिचानको निर्णायक भूमिका हुँदैन; तर *सांस्कृतिक अधिकार*का परिप्रेक्ष्यमाचाहिँ राज्य संस्कृति, प्रजाति, जाति, सम्प्रदाय, समुदाय, भौगोलिकक्षेत्र आदिबाट निरपेक्ष रहन सक्दैन । समष्टिमा, "राज्यराष्ट्र" मा सांस्कृतिक अधिकारका परिप्रेक्ष्यमा रैथाने समुदायको अग्राधिकार भए तापनि नागरिक तथा राजनीतिक अधिकारका परिप्रेक्ष्यमा अग्राधिकार हुँदैन । अर्थात्, नागरिक तथा राजनीतिक अधिकार (Civil and Political Rights) र सांस्कृतिक अधिकार (Cultural Rights) लाई घालमेल गर्न नदिई विशिष्टिकृत प्रत्याभूति गरेर राज्यसत्तामा देशका सबै नागरिकको सहभागिता गराउने, तर प्रजातीय, जातीय, भाषिक, साम्प्रदायिक आदि निहुँमा घृणावादी कित्ताकाट हुन नदिने एवं सांस्कृतिक सामाजिक एकत्वको सुनिश्चित गर्ने पद्धतिलाई "राज्यराष्ट्र" सिद्धान्तमा अवलम्बन गरिएको छ ।

“राष्ट्रियता” को परिभाषा एवं पहिचानका निमित्त “राज्य” नै चुरो तत्त्व मान्ने मान्यता भएकाले नाक चुच्चो छ कि थेप्चो (नेप्टो) छ, आँखा विस्फारित (खुलेको) छ कि चिम्सो छ, रङ्ग गोरो छ कि कालो छ, जुँगा-दाह्री छपक्कै बाक्लो आउँछ कि कताकति तिलचामले मात्र आउँछ, हिमाली भेगको हो वा पहाडी भेगको हो वा तराइ मधेश भेगको हो, कुन जातिको हो, कुन प्रजातिको हो, कुन जातको हो – यस्ता यस्ता निहुँमा मान्छेको कित्ताकाट गर्ने/ध्रुवीकरण हुने घृणावादी राजनीतिका दृष्टिकोणबाट “राष्ट्र” को परिभाषा गर्ने पद्धतिलाई “राज्यराष्ट्र” ले अस्वीकार गर्छ ।

“राज्यराष्ट्र” मा सांस्कृतिक अधिकारका परिप्रेक्ष्यमा रैथाने समुदायको अग्राधिकार मानिने भएकाले कुनै पनि देशमा त्यहाँका मौलिक रैथाने धर्म, संस्कृति, संस्कार, सभ्यता आदिलाई राज्यका सबै संयन्त्रले प्राथमिकता दिनु स्वाभाविक हुन जान्छ। तसर्थ, राष्ट्रिय, प्रादेशिक, स्थानीय सांस्कृतिक व्यवहारमा राज्यले रैथाने समुदायको संस्कृतिलाई प्राथमिकता वाञ्छनीय छ । जस्तै : वैदिक सनातन धर्म (जसलाई हिन्दू संज्ञा पनि दिने गरिएको छ) का साथै बौद्ध, किरात, बोनजस्ता धर्म नेपालका मौलिक रैथाने भएकाले नेपालको पहिचान यहाँका मौलिक रैथाने धर्मबाट हुनु र राज्यका सबै निकाय एवं संयन्त्रहरूले मौलिक रैथाने धर्म, संस्कृति, संस्कार, सभ्यता आदिको विशेष संरक्षण गर्नु “राज्यराष्ट्र” सिद्धान्तको मान्यता अनुसारकै कार्य ठहर्छ। त्यस्तै, नेपालमण्डलमा हुने सांस्कृतिक आयोजनमा नेवार समुदायको, जनकपुरमा हुने सांस्कृतिक आयोजनमा मैथिल समुदायको, डडेल्धुरामा हुने सांस्कृतिक आयोजनमा डोटेली समुदायको केन्द्रीय भूमिका स्वाभाविक रहेको कुरा माथि पनि उल्लेख गरिसकिएको छ । सांस्कृतिक अधिकारका परिप्रेक्ष्यमा रैथाने समुदायको अग्राधिकार भए तापनि नागरिक तथा राजनीतिक अधिकारका परिप्रेक्ष्यमा अग्राधिकार हुँदैन (नागरिकहरूलाई सामान्यतया समान व्यवहार गरिन्छ) भन्ने “राज्यराष्ट्र” को मान्यता हो ।

“राज्यराष्ट्र” सिद्धान्त अनुसारको कुनै पनि देशमा सर्वसत्तावादी शासन प्रणालीलाई स्थान हुँदैन । वैदिक पद्धतिमा व्यक्तिको होइन, विधि (दण्ड,

कानुन) को शासनलाई मात्र स्वीकार गरिएको देखिन्छ। वैदिक परम्परामा सभा र समिति जस्ता प्रतिनिधिमूलक संस्थाको प्रावधान एवं मन्त्रीपरिषद् मार्फत् मात्र शासन-सत्ता संचालन गर्नु पर्ने प्रचलन यहाँनेर उल्लेख्य छ। राज्यका संरचनामा आसीन व्यक्ति, समूह वा दल (पार्टी) खराब भएको अवस्थामा शासन-सत्ताको विरुद्धमा विद्रोह हुने साक्ष्य श्रीमद्भागवतमा बेन र पृथुको प्रकरणबाट पनि उजागर भएकै छ। शासन-सत्तामा रहेका व्यक्ति, समूह वा दल (पार्टी) को चरित्रअनुसार तिनलाई असल वा खराब भनी छुट्ट्याउन सकिन्छ, तर "राज्य" एवं सोही राज्यको आधारमा विकसित "राष्ट्र" चाहिँ सदैव असल नै हुन्छ र यदि सर्वसाधारण जनतालाई राज्यको असल चरित्रको व्यावहारिक लाभ भइरहेको छैन भने शासन-सत्तामा तत्काल परिवर्तन जरुरी हुन्छ भन्ने मान्यता वैदिक पद्धतिमा रहेको छ। "राज्य" एवं सोही राज्यको आधारमा विकसित "राष्ट्र" ले कहिल्यै गल्ती गर्दैन भन्ने मान्यता "राज्यराष्ट्र" सिद्धान्तको विशेषता हो। यसको तात्पर्य राज्यका नाममा सत्तासीन एवं सत्तावृत्तका व्यक्ति, समूह वा दल (पार्टी) ले जे गरे पनि पाउने भन्ने सर्वसत्तावादी सोचलाई मानिएको कदापि होइन, प्रत्युत यदि राज्यका नाममा केही गलत कार्य भइरहेको छ भने त्यो गलत कार्यका निमित्त सत्तासीन एवं सत्तावृत्तका गरिएका व्यक्ति, समूह वा दल (पार्टी) लाई तत्काल दण्ड सजायँ दिएर राज्यलाई सदैव असल, कल्याणकारी, हितकारी चरित्रको बनाइराख्नु अनिवार्य छ भन्ने हो।

युरोपको विशेष ऐतिहासिक, सामाजिक, सांस्कृतिक, राजनीतिक एवं आर्थिक पृष्ठभूमिमा जन्मेका पूँजीवादी र कम्युनिस्ट विचारधारामा वैयक्तिकता र सामूहिकता, सामुदायिकता, राष्ट्रियता आदिलाई एकाङ्गी दृष्टिकोणले हेरिने भएकाले स्वाभाविक सन्तुलनको अभाव हुन्छ। एकातिर पूँजीवादी उदारवादका पक्षधरहरूले वैयक्तिकतालाई अति महत्व दिएर विवाह, परिवार, समुदाय, राज्य जस्ता संस्थागत संरचनाहरूलाई वैयक्तिक स्वतन्त्रताको दृष्टिबिन्दुबाट मूलतः नकारात्मक मान्छन् र अर्कोतिर मार्क्सीय

दर्शनको चुरोमा वैयक्तिकताप्रति अत्यधिक दुराग्रह रहेको देखिन्छ। वैदिक विश्व-दृष्टिकोणमा वैयक्तिकता र सामूहिकता, सामुदायिकता, राष्ट्रियता आदिलाई युरोपेली प्रतिमानमा जस्तो प्रतिस्पर्धी मानिँदैन, प्रत्युत वैयक्तिकता र सामूहिकता, सामुदायिकता, राष्ट्रियता आदिको समुचित सन्तुलन, समन्वय, समष्टिकरणलाई अवलम्बन गरिएको देखिन्छ। यसरी कम्युनिस्ट वा पूँजीवादी जुन कित्ताका भए तापनि युरोपेली प्रतिमानलाई मान्नेहरूले खोटपूर्ण दृष्टिकोणबाट व्यक्ति र राज्यको बीचमा अविश्वासको पर्खाल खडा गरिरहेका हुन्छन्। वास्तवमा, युरोपेली प्रतिमानमा राज्यको भूमिका कि निकै कमजोर हुने, कि त सर्वसत्तावादीले शासन-सत्ता हत्याएर राज्यको नाम दुरूपयोग गरी निरङ्कुश, स्वेच्छाचारी, तानाशाही, फासिवादी, नाजीवादी, प्रजातीय वा जातीय घृणावादी आदि इत्यादि किसिमका शासन लाद्ने खतरा जहिल्यै विद्यमान रहन्छ । तर, “राज्यराष्ट्र” सिद्धान्तमा विधि (दण्ड, कानुन) को सर्वोच्चता हुने भएकाले स्वाभाविक रूपमै सर्वसत्तावादी शासनलाई कुनै स्थान हुँदैन। “राज्यराष्ट्र” सिद्धान्तमा राज्य नै राष्ट्रको आधारशिला मान्ने, भू-राजनीतिक-वैधानिकता र सांस्कृतिक सामाजिक एकत्वको समष्टिलाई प्राथमिकता दिने एवं “राष्ट्रियता” को पहिचान एवं परिभाषाको निमित्त “राज्य” नै निर्णायक तत्त्व मान्ने साथै नागरिक तथा राजनीतिक अधिकार र सांस्कृतिक अधिकारको प्रत्याभूति विशिष्टिकृत (mutually exclusive entities) रूपमा गर्ने पद्धतिलाई अवलम्बन गरिएको हो ।

“राज्यराष्ट्र” स्वाभाविक रूपमा *उदार-राष्ट्रियतावादी* सिद्धान्त हो । अर्कोतिर, “राष्ट्रराज्य”, “द्वि-राष्ट्रियता” र “बहु-राष्ट्रियता” अवधारणाहरूमा गतार्थ युरोपेली प्रतिमान (Outdated European paradigm) हाबी रहेको हुनाले तिनीहरूमा स्वाभाविक रूपमा *सङ्कीर्ण-राष्ट्रियतावादी* दृष्टिकोण रहेको छ। जुन परिस्थितिमा युरोपमा “राष्ट्रराज्य” अवधारणा परिभाषित भएको थियो, सो परिस्थिति आज संसारमा कहिँ-कतै नभएको हुनाले “राष्ट्रराज्य”, “द्वि-राष्ट्रियता” र “बहु-राष्ट्रियता” अवधारणाहरू असान्दर्भिक, अवांछित, अनावश्यक बन्न पुगेका छन् भने

वर्तमान विश्वमा भू-राजनीतिक-वैधानिकता प्राप्त देशहरूका “राष्ट्रियता” को व्यावहारिक, प्रायोगिक, यथार्थपरक परिभाषा एवं व्याख्या दिन सक्ने हुनाले “राज्यराष्ट्र” सिद्धान्तलाई युगीन, समसामयिक, सार्वजनीन (Universal) मान्न सकिने परिस्थिति विद्यमान छ ।

परिशिष्ट

# राज्यराष्ट्रको वैदिक सन्दर्भ

अथर्ववेदमा 'राष्ट्र' तथा 'राज्य' को अवधारणा अहिलेकै जस्तो अर्थमा पाइन्छ । अथर्ववेदमा अनेक राजनीतिक सिद्धान्तहरूलाई स्थान दिइएको छ । वास्तवमा मानव इतिहासमा मातृभूमिको अवधारणा प्रथम पटक अथर्ववेदमै पाइन्छ। प्रसिद्ध 'भूमि-सूक्त'ले नै राष्ट्रियताको अवधारणा विकसित गराएको हो। भूमिसूक्त– १२।१ मा ऋषि पृथ्वीलाई माता र आफू स्वयंलाईचाहिँ उनको पुत्र घोषित गर्दछन् – "माता भूमिः पुत्रो अहम् पृथिव्याः।"

राष्ट्र, राष्ट्ररक्षाको विविध उपाय, विभिन्न शासन प्रणाली, संस्था तथा सिद्धान्तहरूको पनि सुस्पष्ट उल्लेख अथर्ववेदमा छ। कतै जनताका प्रतिनिधिहरूले प्रत्यक्षतः शासन गर्ने गणतन्त्रात्मक शासन प्रणाली थिए; कतै राजतन्त्रात्मक शासन प्रणाली थिए र कतै मिश्रित (अहिलेको सन्दर्भमा भन्नु पर्दा संवैधानिक राजसंस्थायुक्त संसदीय व्यवस्था) शासन प्रणाली थिए। जस्तोसुकै शासन प्रणाली रहेको भए तापनि यतिबेलासम्म शासक भन्दा लोक (प्रजा) नै बलिया रहेका थिए । पौराणिक कालखण्डमा भने शासक (राजा) अत्यन्त बलशाली देखा पर्दछन् । त्यस युगका जनप्रिय शासकहरूको वर्णन पुराणहरूमा हामी पढ्न सक्छौँ। साथै, कतिपय अवसरमा निरङ्कुश शासकविरुद्ध भएका जनविद्रोहका गाथा पनि पुराणका पानामा समेटिएका छन् । यस लेखमा श्रीमद्भागवतमा वर्णित बेन राजाविरुद्धको जनविद्रोहलाई संसारकै पहिलो जनविद्रोहका रूपमा चर्चा गरिएको छ । तत्पश्चात् पृथुले कसरी सङ्क्रमणकालको बुद्धिमत्तापूर्ण व्यवस्थापन गरी जनअनुमोदित शासनको आधारशिला राखे भन्नेबारे चर्चा पनि यहाँ समावेश गरिएको छ ।

वैदिक वाङ्मयको अध्ययन गर्दा शासनको उत्पत्तिसम्बन्धी विभिन्न छ प्रकारका सिद्धान्तहरू खुट्ट्याउन सकिन्छ – (१) व्यक्तिविशेषप्रधान

सिद्धान्त, (२) मत्स्यन्याय सिद्धान्त, (३) सत्ययुग सिद्धान्त, (४) सामाजिक सम्झौताको सिद्धान्त, (५) पितृप्राधान्य सिद्धान्त र (६) दैवी सिद्धान्त । राज्यको उत्पत्तिको आधार जुन सिद्धान्तलाई मान्ने हो, त्यसैअनुसारको शासन प्रणाली निर्धारण हुने तथ्य यहाँनेर स्मरणीय छ ।

प्राचीन भारतवर्षमा शासनका विविध प्रणालीहरू प्रचलनमा थिए । ऐतरेय ब्राह्मणमा विभिन्न प्रकारका शासन प्रणालीहरूबारे वर्णन गरिएको छ ।

**तालिका : ऐतरेय ब्राह्मणमा उल्लेखित शासन प्रणालीहरू**

| क.सं. | शासन प्रणाली | शासकको पदवी | स्थान-निर्देश |
|---|---|---|---|
| १ | साम्राज्य | सम्राट् | पूर्व |
| २ | भौज्य | भोज | दक्षिण |
| ३ | स्वाराज्य | स्वराट् | पश्चिम |
| ४ | वैराज्य | विराट् | उत्तर (उत्तरमद्र, उत्तरकुरु) |
| ५ | राज्य | राट् | कुरु-पाञ्चाल |
| ६ | पारमेष्ठ्य | | कुरु-पाञ्चाल भन्दा उत्तर |
| ७ | माहाराज्य | | " |
| ८ | आधिपत्य (स्वावश्य) | | " |

माथि तालिकामा उल्लेखित शासनप्रणालीहरूलाई मूलतः लोकप्रधान प्रणाली र राजाप्रधान प्रणाली गरी दुई प्रकारमा वर्गीकरण गर्न सकिन्छ । तीमध्ये साम्राज्य, राज्य, पारमेष्ठ्य, माहाराज्य र आधिपत्यमा राजसत्ताको र भौज्य, स्वाराज्य र वैराज्यमा लोकसत्ताको प्राधान्य रहेको बुझिन्छ ।

राजसत्तात्मक हुँदैमा ती सबै व्यवस्थामा निरपेक्ष रूपमा राजा सर्वशक्तिमान रहने अवस्था भने थिएन । यजुर्वेदमा कतिपय यस्ता मन्त्र विद्यमान छन्, जसको आधारमा हामी त्यतिखेर राजा जनताद्वारा प्रत्यक्षत: निर्वाचित हुनु पर्ने व्यवस्था रहेको बुझ्छौं (जस्तै– यजु. ९।४०) । कतिपय अवस्थामा राजालाई हटाउन र पुनर्नियुक्त गर्न पनि सकिने प्रावधान रहेको (अथर्व. १।४।६) देखिन्छ । रामायणकालमा पनि राजाको छोरा नै स्वत: राजा बन्ने कुनै निश्चित थिएन र विश: (जनता) ले वरण गरेपछि मात्र कोही व्यक्ति औपचारिक रूपमा राजा बन्न सक्दथ्यो । राजाको उत्तराधिकारीका रूपमा उनका जेठा छोरालाई प्राथमिकता दिइन्थ्यो; तर त्यो अनिवार्य थिएन र परिषद् (सभा) ले अन्य व्यक्तिलाई उत्तराधिकारी चयन गर्ने सम्भावना पनि प्रबल रहन्थ्यो ।

'सम्राट-पद्धति' अनुसार सम्राटको आज्ञानै सर्वमान्य हुन्छ । राजा वा सम्राटका  लागिपनि नैतिक नियमहरू हुन्छन् र उसले त्यही आधारमा शासन गर्दछ । राजाले प्रजाको रक्षा गर्नु, राष्ट्रको उन्नति प्रगति गराउनु र दुष्टहरूलाई दण्ड दिनु पर्दछ । आफ्नो दण्ड विधानले नै राजा प्रतापी हुन्छ (अथर्व. ४।८।१) भनिएको छ । 'विराट' पद्धतिमा राजा हुँदैनन् । जनता सर्वसम्मति या बहुमतका आधारमा आफ्नो फैसला गर्दछन् । यस पद्धतिमा जो सामूहिक निर्णय हुन्छ, त्यही नै मान्य हुन्छ ।

'स्वराट्' पद्धतिमा केन्द्रीय शासन हुन्थ्यो । अथर्ववेदमा स्वतन्त्र राजाको लागि 'स्वराट्' शब्द प्रयोग गरिएको छ, जो आफ्नो तेजस्विताका कारण निर्वाचित हुन्छ (अथर्व. २०।११३।२) । जनता यस्तो व्यक्तिलाई चयन गर्दछन् जो इन्द्र अर्थात् ऐश्वर्ययुक्त होस् । वृत्र अर्थात् पापी/अज्ञानी व्यक्तिलाई राजा बनाउने उनीहरूको चाहना हुँदैन (अथर्व. १२।१।३७) । यस प्रणालीमा जनताका प्रतिनिधि सभा र समितिमा जान्छन् र केन्द्रीय सभा तथा समितिमा उनीहरू राज्य सम्बन्धी नियमहरू बनाउँछन् । यसमा जनताका प्रतिनिधिले राष्ट्रमा शासन गर्ने हुनाले यसलाई जनतन्त्र राज्य पनि भनिन्छ ।

ऐतरेय ब्राह्मणमा उल्लेखित आठ प्रकारका शासन प्रणालीका अतिरिक्त अन्य प्रणालीहरू पनि कालान्तरमा भारतवर्षमा प्रयोगमा आउन थालेका संस्कृत वाङ्मयको अध्ययनबाट थाहा लाग्दछ। उदाहरणका लागि, राष्ट्रिक, पेत्तनिक, द्वैराज्य, अराजक, उग्र र राजन्य । शुक्रनीतिमा हेर्ने हो भने प्रायः राजसत्तात्मक प्रणालीकै मात्र वर्णन हामी पाउँछौँ । ऐतिहासिक विकासक्रमलाई ध्यानपूर्वक हेर्दा भारतवर्षीय समाज जति जति वैदिककालबाट पौराणिककालतिर पदार्पण गर्दै गयो, उति उति लोकसत्ता कमजोर र राजसत्ता बलियो हुँदै गएको देखिन्छ ।

वैदिक वाङ्मयमा एकातिर राजाकै एकल शासन चल्ने प्रणाली र अर्कोतिर गणतन्त्रात्मक शासन प्रणालीजस्ता नितान्त विपरित प्रणालीहरूबारे उल्लेख गरिएको भए तापनि वैदिक ऋषिहरूले आदर्श ठहऱ्याएको शासन प्रणाली भने मध्यमार्गी रहेको देखिन्छ । अहिलेको सन्दर्भमा राजासहितको संसद (किङ्ग इन पार्लियामेन्ट) भन्न सकिने लोकतान्त्रिक पद्धति अनुरूपका सभा (ऋ. १०।७१।१०, अथर्व. ७।१२, यजु. १६।२४ र १६।२८) एवं समिति (अथर्व ६।८८।३ र ५।१९।१५) जस्ता संस्थाहरूसहितको राजसंस्थाको व्यवस्थालाई सर्वोत्तम मानिएको साक्ष्य वैदिक वाङ्मयमा छ । वैदिक युगको राष्ट्रको शासन आदर्श अवस्थामा सभा र समिति नामका दुई संस्थाहरूसहित राजाद्वारा हुने गरेको देखिन्छ। राज्यको प्रशासन चलाउन राजाले मन्त्रिमण्डलको गठन गर्नु पर्ने र त्यो मन्त्रिमण्डल सभा र समितिबाट अनुमोदित हुनु पर्ने प्रचलन रहेको थियो ।

अथर्ववेदकालीन राज्यमा पाँच प्रकारका लोक (प्रजा) रहेका थिए – ब्राह्मण, क्षत्रिय, वैश्य, शुद्र र निषाद । यी सबै पृथ्वीकै सन्तान भएकाले सबैलाई समान अधिकार प्राप्त हुने कुरा अथर्ववेदमा बताइएको छ (अथर्व. १२।१।१५) । राष्ट्रमा उँच-नीचको भेद नभएर मित्रता र एकताको भाव होस् (अथर्व. १२।१।२); पारस्परिक फूट कहिल्यै नहोस् (अथर्व. ३।८।१) र संगठन, सौमनस्यको विस्तार होस् (अथर्व. ६।६४।१) भन्ने भावना व्याप्त रहेको देखिन्छ ।

राष्ट्रको रक्षाका लागि सेना आवश्यक हुने भएकाले २१ प्रकारका सेनाको व्यवस्था गरिएको देखिन्छ । *वैदिक कालीन सेनामा पुरुषकासाथै महिला पनि रहने गरेको बुझिन्छ । अथर्ववेद २।३।१ मा इन्द्रलाई र १।२७।४ मा इन्द्राणीलाई सेनापतिका रूपमा उल्लेख गरिएको छ ।* सामान्यतया युद्धलाई ठीक मानिएको छैन, तर कसैले आक्रमण गरेमा प्रत्याक्रमण गर्न भनिएको छ । जीवनलाई राष्ट्रको सम्पत्ति सम्झेर कार्य गर्न वेदमा प्रेरणा दिइएको र राष्ट्र-रक्षाका लागि राजा र प्रजा समानरूपेण उत्तरदायी भएको देखिन्छ । सबैको कल्याण गर्ने भावना, सत्यको आत्मसातता, पदार्थहरूको यथार्थ ज्ञान प्राप्त गरी प्राकृतिक नियमहरूको ठीक-ठीक पालना, आस्तिकता, धर्ममय आचार-व्यवहार वैदिक राजनीतिका आधारका रूपमा स्पष्टसँग देख्न सकिन्छ ।

पौराणिककालमा भने राजसत्ता नै प्रायः सर्वस्वीकृत शासन प्रणाली बन्न सफल भयो । त्यसयता भारतवर्षीय राज्यहरूमा राजाको वरिपरि नै सम्पूर्ण राज्यसत्ता घुमेको र राज्यको भाग्य पनि राजाअनुसार सौभाग्य वा दुर्भाग्यका रूपमा रहने गरेको देखिन्छ । हुन त त्यस युगमा पनि प्रायः राजाहरू आफ्नो सर्वोच्चताको स्थितिमासमेत जनतालाई 'जनार्दन' का रूपमा उत्तिकै महत्व प्रदान गर्नमा सचेत रहेको देखिन्छ । तर बेनजस्ता कतिपय राजाहरूले आफूलाई स्वेच्छाचारी, निरङ्कुश बनाएर अलोकप्रियता कमाएकाले लोक (प्रजा) ले विद्रोह गरेको दृष्टान्त पाइन्छ ।

बेन भनिने राजाको निरङ्कुश, स्वेच्छाचारी शासनबारे श्रीमद्भागवतमा प्रशस्त लेखिएको छ । कतिपय कुरा अतिरञ्जना र मिथकीकरणले यता उता परे तापनि श्रीमद्भागवत पढ्दा प्रष्ट बुझिन्छ कि"राजा नै ईश्वर हो", "राजा नै राष्ट्र हो" र "राजाको स्वैच्छिक आदेश नै दण्ड (कानुन) हो" भन्ने घोषणा गर्दै बेनले सभा, समिति र मन्त्रिपरिषद्लाई भङ्ग गरिदियो । आफ्ना राज्यभित्रका सम्पूर्ण ग्रामसभा, गणसभा र जानपदसभालाई पनि उसले भङ्ग गरिदियो । राज्यले जुनसुके बेला व्यक्तिको स्वतन्त्रता र आर्थिक अधिकारमाथि हमला गर्ने चलन बेनले बसाल्यो ।

आफ्नो इच्छामुताबिक धार्मिक कर्म गर्नसमेत रोक लाग्यो । वैदिक राजनीतिअनुसार सञ्चालित शासन पद्धतिलाई बेनको सैन्यवादी पद्धतिले विस्थापन गरेपछि लोकमा अत्यन्त असन्तुष्टि फैलियो ।

सर्वसाधारणले आफ्नो कष्ट ऋषिहरूसमक्ष राखेपछि अहिंसावादी ऋषिहरूले पहिले त बेनलाई भेटी राजधर्म सम्झाउन प्रयास गरे । तर बेनले ऋषिहरूको प्रमण्डललाई दुर्व्यवहार गऱ्यो । राजसत्ता र लोकसत्ताको सुसंयोजनमा राष्ट्र अघि बढ्नु पर्दछ भन्ने ऋषिहरूमध्ये केहीलाई बेनले जेलमा राख्यो । अति भएपछि एकथरीले जङ्गलबाट बेनविरुद्ध सशस्त्र विद्रोह सुरु गरेको बुझिन्छ, जसलाई श्रीमद्भागवत 'निषाद' का रूपमा चिनाइएको छ । यता ऋषिहरूले भने त्यस्तो हिंसात्मक विद्रोह अस्वीकार गरे । उनीहरूले 'हुङ्कार' ले नै बेनको सैन्य उन्मादमाथि विजय प्राप्त गरे । श्रीमद्भागवतमा जेलाई 'हुङ्कार' भनिएको छ, अहिलेको सन्दर्भमा त्यो नारा-जुलुस र हड्ताल नै हो ।

बेनविरुद्ध लोकले गरेको विद्रोह नै मानवको ज्ञात इतिहासमा प्रथम जनविद्रोह हो । यसअघि पश्चिमा सन्दर्भमा स्पार्टाकसको नेतृत्वमा दासहरूद्वारा भएको विद्रोहलाई प्रथम जनविद्रोहका रूपमा व्याख्या गर्दै उनलाई 'आदिविद्रोही' मान्ने गरेको पाइन्छ । उता, चिनीया सन्दर्भमा आँखीभौँ रङ्गाएकाहरूको र पहेँलो फेटा बाँधेकाहरूको विद्रोह (किसान विद्रोह) लाई अझ प्राचीन मानिन्छ । तर ती सबै भन्दा पुरानो ठहर्छ राजा बेनविरुद्धको विद्रोह । उक्त पौराणिक विद्रोहको विशेषता केमा पनि छ भने त्यसले आधुनिक सन्दर्भमा 'सत्याग्रह' भनिने अहिंसात्मक विद्रोहको श्रेष्ठता त्यतिखेरै प्रमाणित गरेको छ ।

बेनको पतनपछि नयाँ शासक कसलाई बनाउने भन्ने सवाल खडा भयो । बेनविरुद्ध सशस्त्र विद्रोह गर्ने 'निषाद' को दाबी सबै भन्दा पहिले आयो । तर ऋषिहरूले अस्वीकार गरेपछि 'निषाद' को सत्तारोहण सम्भव भएन । स्वयं ऋषिहरूले नै सत्ता चलाउनु पर्ने एकथरीको मागलाई ऋषिगणले स्वीकारेन, किन भने उनीहरूले विद्रोहको नेतृत्व गरेको शासक

बन्ने अभीष्टले थिएन । नयाँ राज्यको स्वरूप कस्तो हुनु पर्ने र कस्तो शासन प्रणालीमा कसलाई शासक बनाउने भन्नेबारे अन्यौलको स्थिति केही लामै समयसम्म कायम रहेको सङ्केत श्रीमद्भागवतमा पाइन्छ । ऋषिहरू र सर्वसाधारणको मत सभा र समितिसहितको राजा रहने पुरानै पद्धतिको पक्षमा गएपछि 'निषाद' पक्षको दाबी एकदमै कमजोर ठहरियो र अन्त्यमा बेनकै वंशज पृथुलाई राजा बनाउने सहमति जुट्यो ।

श्रीमद्भागवतमा बताइएअनुसार राज्यको सञ्चालन लोकसम्मतिको आधारमा राजा, मन्त्रिपरिषद्, सभा, समिति र स्थानीय पालिकाहरूले गर्ने संयन्त्र विकास गरिएको थियो । बेन भन्दा अघि गणसभाहरू मुख्य शक्तिशाली हुने गरेकोमा पृथुको समयमा भने तिनलाई भन्दा पनि भौगोलिक आधारलाई प्रधानता दिई ग्रामपालिका, नगरपालिका जस्ता निकायको व्यवस्था गरिएको बुझिन्छ । (यो पक्ष विशेष ध्यानयोग्य छ । यतिखेर नेपालमा राज्यको पुनर्संरचनाको बहस तात्तातो छ र पुनर्संरचनाको आधार जातिगत हुनु पर्दछ भन्ने स्वर निकै चर्कोसँग उठिरहेको छ । जनविद्रोह गरी बेनलाई सत्ताच्यूत गरेपछि प्राचीन भारतवर्षका लोकसमक्ष पनि यस्तै सवाल खडा भएको थियो । उनीहरूले जातिगत वा गणगत आधारमा बनाइने संरचनाले अहित हुने निष्कर्ष निकाले । जातिगत आधारमा बनाइएको संरचनाले राष्ट्रिय एकता अझै सुदृढ पार्छ वा जातिवादी संकीर्ण सोचलाई मल-जल गर्छ ? यसबारे नेपाली जनता कस्तो निष्कर्षमा पुग्ने हुन् भन्ने चाहिँ अझै विचार मन्थन हुँदै जाँदा थाहा होला नै ।)

सभा र समितिमा राष्ट्रका सबै भूभाग र सबै समुदायको प्रतिनिधित्व होस् भनेर विशेष ध्यान पुऱ्याइएकाले अचेल भनिने 'समावेशीकरण' को अवधारणालाई पनि त्यतिखेर आत्मसात् गरेको भन्नु पर्ने हुन्छ । सम्भवत: त्यतिखेर बनाइएको दण्डनीति (कानुन) लिखित नै थियो । बेनबाट त्यसअघि नै ठूलो धोका खाइसकेकाले पृथुलाई दण्ड (कानुन) को पूर्ण नियन्त्रणमा राख्ने प्रबन्ध गर्न भने ऋषिहरूले भुलेनन् भन्ने प्रष्टै बुझिन्छ ।

त्यो प्रथम जनविद्रोहले कुनै व्यक्तिविशेषको स्वेच्छाचारी शासनको अवधारणालाई स्पष्टतः अस्वीकार गर्दै शासन विधि वा कानुन (त्यतिखेरको शब्दावलीमा 'दण्डनीति') को हुनु पर्ने वैदिक मान्यतालाई पुनर्पुष्टि गऱ्यो । राजालाई 'राष्ट्रभृत्य' (राष्ट्रको सेवक) र लोकलाई 'राष्ट्रस्वामी' मानिने (अथर्व. १९।३७।२ र १५।९।१) वैदिक मतमा पृथुले पूर्ण आस्था प्रकट गरेका थिए । उनको जनप्रियताबाट डाढिएर अर्को राज्यका 'इन्द्र' नामका कोही समकालीन राजाले पृथुविरुद्ध प्रचारयुद्ध (आधुनिक सन्दर्भमा प्रोपागाण्डा-वार) समेत गरेका थिए । तर उनको लोकप्रियता यस्तरी बढ्यो कि राज्यारोहणको केही वर्षपछि नै लोकले पृथुलाई विष्णुको अवतार (जीवित ईश्वर) का रूपमा पूज्न थालिसकेका थिए । उनकै नामको आधारमा धर्तीको नयाँ संज्ञा 'पृथिवी' भन्न थालिएको थियो ।

यसरी पारस्परिक सहृदयताले राजा र प्रजाबीचको सम्बन्ध अत्यन्त सौहार्द्र बन्न पुगेको थियो । वैदिक राजधर्मको मर्यादालाई पृथुले कहिल्यै उल्लङ्घन नगरेको श्रीमद्भागवतमा बताइन्छ। यद्यपि कालान्तरमा रावण, कंस, जरासन्ध, शिशुपाल, शाल्वजस्ता राजाहरूले भने राजालाई नै सर्वेसर्वा ठान्ने बेनको सोचलाई फेरि अगाडि बढाएका थिए। हाम्रोमा एक शताब्दी चलेको राणाशासन बेनवादी शासन प्रणालीको अर्को रूप थियो । अस्तु ।

# सन्दर्भ सामग्री


अधिकारी, निर्मलमणि । वि.सं. २०५७, कार्तिक २३ । नेपालमा जातीय समस्याको सवाल र समाधान । *घटना र विचार साप्ताहिक*

अधिकारी, निर्मलमणि । वि.सं. २०६२ । *मीमांसा-दर्शन निर्देशन*। काठमाडौँ : प्रशान्ति पुस्तक भण्डार ।

अधिकारी, निर्मलमणि । वि.सं. २०६३, जेठ । वैयक्तिक स्वतन्त्रता : चाणक्य र जेएस मिलका दृष्टिकोण । *प्राची*, पूर्णाङ्क ५७-५८, पृ. ४३-४६ ।

अधिकारी, निर्मलमणि । वि.सं. २०६३, साउन । महाभारत युद्धपश्चात्को अन्तरिम अवधि र त्यसबाट सिक्न सकिने पाठ । *प्राची*, पूर्णाङ्क ५९, पृ. ४१-४३ ।

अधिकारी, निर्मलमणि । वि.सं. २०६३, असोज । विश्वको प्रथम जनविद्रोह, बेनको पतन र नयाँ राष्ट्रको विधि निर्माण । *प्राची*, पूर्णाङ्क ६०, पृ. ४३-४५ ।

अधिकारी, निर्मलमणि । वि.सं. २०७१ । *महान् दार्शनिक कुमारिल भट्ट र भाट्ट-मीमांसा-दर्शनको संक्षिप्त परिचय*। काठमाडौँ : शिवप्रसाद गौतम, शान्तिदेवी गौतम र सुशील गौतम ।

अधिकारी, निर्मलमणि । वि.सं. २०७२ । *वेद र वैदिक हिन्दू धारा*। झापा : गङ्गादेवी चुडाल ।

आयोद धौम्य 'निर्मल' । वि.सं. २०५६ । *चुच्चे-नेप्टेको सवाल र दशैं बहिस्कार* । विराटनगर : नेपाली भाषा-संस्कृति परिषद् ।

आयोद धौम्य 'निर्मल' । वि.सं. २०५७ । *आस्थाको शान्ति-युद्ध*। विराटनगर : नेपाली भाषा-संस्कृति परिषद् ।

आयोद धौम्य । वि.सं. २०५७ । *छीनीङ पीहीनो मगरको ?* विराटनगर : नेपाली भाषा-संस्कृति परिषद् ।

आयोदधौम्य 'निर्मल' । वि.सं. २०६१ क । *वैज्ञानिकतायुक्त धर्म धार्मिकतायुक्त विज्ञान* । काठमाडौं : युग निर्माण अभियान नेपाल ।

आयोदधौम्य 'निर्मल' । वि.सं. २०६१ ख । *वैज्ञानिक सत्ययुगको आधारशीला*। काठमाडौं : युग निर्माण अभियान नेपाल ।

आयोदधौम्य । वि.सं. २०६५क । *ब्राह्मणवाद विरुद्ध घृणावाद : नेपालमा जातीय, भाषिक र साम्प्रदायिक सवाल* । काठमाडौं : निरन्तर प्रकाशन ।

आयोदधौम्य । वि.सं. २०६५ख । वीराङ्गना शूरप्रभा । *आठ खण्डकाव्यहरू आयोदधौम्यका* । पिपलटार, तनहुँ : तङ्ग साहित्यिक अभियान ।

जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति । वि.सं. २०७२ । *आह्वानपत्र* । काठमाडौं ।

जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति । मिति अनुल्लेखित । *परिचय* । काठमाडौं ।

Adhikary, N. M. 2010. Post-2006 Tarai/Madhesh unrest in Nepal: An attempt for searching new identity. *Shweta Shardul*, vol. VII, pp. 12-18.

Adhikary, N. M. 2014. *Theory and practice of communication – Bharata Muni.* Bhopal: Makhanlal Chaturvedi National University of Journalism and Communication.

विज्ञानको बुद्धि

प्रविधिको प्रगति ।

धर्मको विवेक

सहृदयताको सम्बन्ध ॥

विज्ञानको बुद्धि प्रविधिको प्रगति ।
धर्मको विवेक सहृदयताको सम्बन्ध ।।

मूल्य रु. १००/-


ISBN 978-9937-0-1827-2
9 789937 018272